# आश्रम गतिविधि

गत जेठ १३ गते श्री गोरक्ष प्रकट दिवसदेखि ११ दिनसम्म गोरखामा सञ्चालित सातौं रोट महोत्सवका केही झलकहरु ।

(समाचार पृष्ठ ४७ मा)

● वर्ष ११ ● अङ्क ११ ● आषाढ २०६७ ● पूर्णाङ्क १३१

## सम्पर्क कार्यालयहरू


- **चितवन**, भ.न.पा- २, क्षेत्रपुर फोन: ०५६-५२१३८५
- **गोरखा**, सौरपानी–३ पोखरी, फोन: ९७४६०१८८७८, ९७४११२७७४५
- **कास्की**, पो.उ.म.न.पा.-१०, रामघाट, फोन: ०६१-५३०७८६
- **सर्लाही**, बरहथवा-७, एस्माली टोल, फोन: ०४६-५४००११
- **पाल्पा**, तानसेन, फोन: ९८४७०-२८१८८
- **ललितपुर**, लगनखेल, फोन:२२२००२१
- **गोरखा**, बसपार्क, फोन: ०६४-४२०३४८
- **तनहुँ**, दमौली, व्यास गुफा, फोन: ०६५-५६१६६२
- **लमजुङ**, बैँसीशहर, भीमसेनटोल
- **भक्तपुर**, कटुन्जे-१, फोन: ०१-६२१३४५५
- **काभ्रे**, बनेपा, न.पा. कार्यालय पछाडि फोन: ०१-६२२५१७२
- **कास्की**, लेखनाथ चोक, फोन: ०६१-२२९१९०
- **सिन्धुली**, रातमाटा फोन: ९८४४०४०८९९
- **स्याङ्जा**, स्याङ्जाबजार फोन: ९८४६०-४४३५४
- **चितवन**, गौरीगञ्ज
- **सिन्धुपाल्चोक**, बाह्रबिसे फोन: ०१-६९१६५९३
- **कास्की**, अर्चलबोट, विन्ध्यवासिनी
- **काठमाडौँ**, पुरानोबानेश्वर, फोन: ०१-२१०११२६
- **काठमाडौँ**, सिमलटार
- **काठमाडौँ**, तीनकुने (मुनि भैरव)
- **ललितपुर**, गोदावरी


पत्रिका व्यवस्थापन समितिद्वारा सम्पादित एवं
***सिद्धाश्रम शक्ति केन्द्रद्वारा* प्रकाशित**

## गौ विशेष

मूल्य रु. ३०/-, वार्षिक रु. ३५०/-

# जानकारी

सिद्धाश्रम शक्ति केन्द्र प्रचलित नेपाल कानूनअनुसार विधिवत् रूपमा दर्ता भएको एक अनुसन्धानमूलक आध्यात्मिक संस्था हो र यसको केन्द्रीय कार्यालय हाल बसुन्धरा, काठमाडौँमा रहेको छ । परमपूज्य सद्गुरुदेवद्वय परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज एवं नेपालीहरूका गर्वका प्रतिमूर्ति महायोगी श्री शिव गोरक्षको अनुकम्पा, कृपा एवं आशीर्वादको फलस्वरूप यस केन्द्रको जन्म भएको हो । आफ्नो छुट्टै पहिचान, स्वतन्त्र अस्तित्व एवं आफ्नै किसिमको स्वाभिमान बोकेको यो संस्था देश विदेशमा रहेका अन्य कुनै संघ, संस्था वा आश्रमको शाखा, उपशाखा वा सम्पर्क कार्यालय नभएको व्यहोरा सम्बन्धित सबैका लागि जानकारी गराइएको छ । यो केन्द्र महान् गुरुहरूको स्पष्ट सूक्ष्म मार्गनिर्देशनमा आध्यात्मिक युग पुनर्निर्माणको लक्ष्यमा गतिशील छ । यहाँ संचालन भइरहेका सम्पूर्ण कार्यक्रम तथा गतिविधिहरू यसै केन्द्रमार्फत सोझै निर्देशित छन् । यहाँबाट उपलब्ध हुने सम्पूर्ण सामग्रीहरूको प्राण-प्रतिष्ठा विशेषरूपमा यही आश्रमबाट गरिएको हुन्छ । त्यसैले एक स्वतन्त्र र आफैमा सक्षम यस संस्थालाई अन्य कुनै संघ, संस्था वा आश्रमसँग तुलना गर्न खोज्नु, त्यस्तै प्रकारका कुराहरू यहाँबाट लागू गराउन, प्राप्त गर्न खोज्नु यस संस्थाको अवहेलना गरे सरह हुनेछ जे जति कार्यक्रमहरू यहाँ संचालन भइरहेका छन् र आगामी दिनहरूमा पनि संचालन हुँदै जानेछन्, ती सबै परमपूज्य सद्गुरुदेवहरूकै इच्छा एवं निर्देशनअनुसार सम्पन्न हुनेछन् । त्यसैले अनावश्यक तर्क-वितर्क, शङ्का-उपशङ्का गरी, भ्रम फैलाउँदै यस संस्थाको छविमाथि अनावश्यक टीका-टिप्पणी गर्नु सत्यता र वास्तविकतामाथि नै प्रश्नचिह्न लगाउनु हो । प्रत्येक व्यक्तिका लागि आवश्यक पर्ने सम्पूर्ण प्रकारका मार्गनिर्देशन प्रदान गरी भौतिक समस्याहरूको समाधान गर्दै आध्यात्मिक उच्चता प्रदान गर्न, पूर्णतामा लैजान यो केन्द्र सक्षम छ । विश्वास अविश्वासभन्दा माथि, साधारण व्यक्तिको सीमित सोचाइ, विचार र कल्पनाभन्दा परको यस अद्वितीय आश्रममा आबद्ध भई आफ्नो जीवनलाई उत्कर्षमा पुऱ्याउन सक्नु नै हाम्रो अहोभाग्य हुनेछ । यस्ता प्रकारका अनावश्यक भ्रमबाट सतर्क हुँदै पूर्णरूपमा स्पष्ट भएर मात्र अघि बढ्न हुन सम्पूर्ण महानुभावहरूमा सिद्धाश्रम शक्ति केन्द्र हार्दिक अनुरोध गर्दछ । साथै केन्द्रको आफ्नै प्रकारको नीति, नियम र अनुशासन भएकोले यसलाई पालना गर्न नसक्ने व्यक्तिहरूका लागि यस केन्द्रमा कुनै स्थान रहने छैन र यससम्बन्धी कुनै किसिमको सुनुवाइ पनि नहुने व्यहोरा अवगत गराइएको छ । साथै, आध्यात्मिक शक्ति अनुसन्धानमूलक यस मासिक पत्रिकामा प्रकाशित लेख, रचना, चित्रादिमा संस्थाको सहमति हुन आवश्यक नरहेको व्यहोरा अवगत गराइन्छ ।

## आश्रमका नियमित कार्यक्रमहरू

प्रत्येक साँझ ५ बजे गुरु आरती । प्रत्येक बृहस्पतिबार बिहान १० बजे गुरु पूजन । प्रत्येक अंग्रेजी महिनाको २१ तारीख दिव्य गुरु महोत्सव कार्यक्रम । प्रत्येक महिनाको पहिलो सोमबार पशुपति मृगस्थलीस्थित श्री श्री महायोगी गुरु गोरखनाथको मन्दिर प्रांगणमा श्री शिव गोरक्ष हवन, पहिलो मंगलबार लगनखेलस्थित वटुक भैरव मन्दिर प्रांगणमा तान्त्रोक्त वटुक भैरव हवन, पहिलो बुधबार लगनखेलस्थित महालक्ष्मी मन्दिर प्रांगणमा तान्त्रोक्त महालक्ष्मी हवन तथा पहिलो बिहीबार पाटन कुम्भेश्वरस्थित वगलामुखी मन्दिर प्रांगणमा तान्त्रोक्त बगलामुखी हवन कार्यक्रम सञ्चालन । विभिन्न चाडपर्वहरूमा विशेष कार्यक्रम । गोरक्ष निखिल वाणी आध्यात्मिक शक्ति अनुसन्धानमूलक मासिकको प्रकाशन । विभिन्न एफ.एम. स्टेशनहरूमार्फत् गोरक्ष निखिल सन्देश रेडियो कार्यक्रम सञ्चालन । समाजमा आध्यात्मिक शिक्षा लागू गराउनका लागि गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमको सञ्चालन । तान्त्रिक ध्यानका विभिन्न चरणका कक्षाहरू । समय समयमा विशेष साधना कार्यक्रमहरू । प्राणप्रतिष्ठित तान्त्रिक सामग्रीहरूको वितरण । समस्या समाधानका लागि परामर्श सेवा । असाध्य रोगका लागि तान्त्रिक हिलिङको व्यवस्था ।

**आवरण तथा भित्री कम्प्युटर सेटिङ्ग**
सिद्धाश्रम शक्ति केन्द्र, कम्प्युटर उपविभाग
ssk.org.np, info@ssk.org.np

**मुद्रण**
**भेराइटी प्रिन्टर्स प्रा.लि.**
कुलेश्वर, काठमाडौं ।

**पत्रिकाको कार्यालय**
**बसुन्धरा, काठमाडौं, नेपाल**
**फोन नं: ०१-४३८९१५४, पत्रिका वितरण फोन नं: ०१-६२२५१७७** (CDMA Phone), URL: gnv.org.np, Email: info@gnv.org.np

# आफ्नै कुरा

'गोरक्ष प्रकट दिवस'को पावन अवसर पारी हालै सिद्धाश्रम शक्ति केन्द्रले सातौं रोट महोत्सव कार्यक्रम भव्य एवं दिव्यरुपमा सम्पन्न गर्‍यो। रोट महोत्सव सारा भक्तहरुको, शिष्यहरुको भाव, श्रद्धा अर्पण गर्ने महोत्सव हो, गुरुकृपा, आशीर्वाद प्राप्त गर्ने स्वर्णिम अवसर पनि हो। यसपालि सातौं रोट महोत्सव भएकोले पनि होला, रोट महोत्सव गुरुकृपा, आशीर्वादले सफलतापूर्वक सम्पन्न भयो। यस रोट महोत्सव सफल बनाउन सहयोग गर्ने सम्पूर्ण महानुभावहरुलाई यस केन्द्र हार्दिक धन्यवाद ज्ञापन गर्दछ। परमपूज्य सद्‌गुरुदेवहरुको कृपाले नै यस कार्यक्रम सफल भयो। त्यसैले परमपूज्य सद्‌गुरुदेवहरुप्रति नतमस्तक हुँदै कोटिकोटि नमन गर्दछौं। आउँदा दिनहरुमा पनि यसैगरी गुरुकृपाले कार्यक्रमहरु सफल हुँदै सिद्धाश्रम शक्ति केन्द्रको स्वर्णिम भविष्य निर्माण हुँदै जानेछ भन्ने आशा लिएका छौं।

परमपूज्य सद्‌गुरुदेव परमहंस स्वामी श्री निलिखेश्वरानन्द महाराजले बाँकी कार्य आफ्ना शिष्यहरुलाई जिम्मा लगाई जुलाई १९९८ मा महाप्रयाण लिनुभएको हो। जुलाई ३ लाई सिद्धाश्रम शक्ति केन्द्रले 'महाप्रयाण' दिवसको रुपमा मनाउँदै आइरहेको छ। युग परिवर्तनजस्तो कठिनतम् कार्य आफ्ना शिष्यहरुलाई जिम्मा लगाई शिष्यहरुमार्फत् आध्यात्मिक युग ल्याउने शिष्यवत्सल गुरुप्रति नतमस्तक हुँदै केही प्रण गर्ने बेला आएको छ। गुरु र संस्थालाई धोका नदिई, गुरु आदेश निर्देशनलाई पालना गर्दै आध्यात्मिक युग ल्याउने तयारीमा जुट्ने बेला आएको छ। त्यसैले सम्पूर्ण शिष्यहरुले आत्मालाई साक्षी राखेर अगाडि बढ्ने बेला आएको छ।

यस अंकलाई हामीले 'गौ विशेष'को रुपमा निकालेका छौं। गाईलाई हिन्दु धर्म संस्कृतिमा गौमाताको रुपमा मानिएको छ। गाईलाई सम्पूर्ण देवीदेवताको निवासको रुपमा लिइन्छ अर्थात् गाईलाई धर्मको प्रतीक मानिएको छ, धर्मसँग दाँजिएको छ, गाईको रक्षाभित्र नै धर्मको रक्षा हुने यथार्थतालाई व्याख्या गरिएको छ। हिन्दु धर्मको प्रत्येक कर्महरुमा, सही संस्कारमा अर्थात् जन्मदेखि मृत्युसम्मका प्रत्येक कार्यमा गाईको दूध, दही, घिउ, गहुँत आदिको विशिष्ट महत्त्व रहँदै आएको छ। त्यसैले गाईको महत्त्व चाहे स्वास्थ्यको दृष्टिले होस्, असाध्य रोगको उपचारमा होस् वा धार्मिक दृष्टिकोणले पूजा, आजा आदिमा होस् वा आध्यात्मिक दृष्टिकोणले आत्माको उन्नति प्रगतिका लागि होस्, सम्पूर्ण रुपले गाईको महत्वको व्याख्या गर्न सकिँदैन।

आज जानेर नजानेर गाईको गरिमा, महिमा नबुझेर गौहत्याका घटना सुन्नु निन्दनीय र निकृष्ट कार्य हो। गौहत्यालाई ब्रह्महत्या अर्थात् सबैभन्दा ठूलो पापको रुपमा लिइएको छ। त्यसैले गौहत्याजस्तो निकृष्ट कार्य रोक्न हामी सबैको कर्तव्य हो। त्यसैले यस कार्यमा सबैले आ-आफ्नो तर्फबाट सहयोग गर्नुहुनेछ भन्ने हामीले आशा लिएका छौं।

अन्तमा, गाईको महत्त्व बढोस् भन्नाका लागि हामीले केही अंश रुपमा समेटेर गौ विशेष निकालेका छौं। यसमा हुन गएका कमी-कमजोरीका लागि परमपूज्य सद्‌गुरुदेवहरुसमक्ष र यहाँहरुसँग पनि क्षमायाचना गर्दै आवश्यक सल्लाह सुझावको अपेक्षा राख्दछौं।

अस्तु।

परमपूज्य सद्‌गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज

परमपूज्य सद्‌गुरुदेव श्री श्री महायोगी गुरू गोरखनाथ

मानव जीवनमा गुरुको सर्वथा उच्च स्थान मानिन्छ। गुरु प्राप्तिबिना मानव जीवन व्यर्थ छ। सम्पूर्ण शास्त्रको सम्यक् ज्ञान भए पनि, धन सम्पत्ति र रूप लावण्यले भरिपूर्ण भए पनि, समस्त प्रकारका सिद्धि, शक्ति र ऐश्वर्यले भरिपूर्ण भए पनि यदि गुरु प्राप्त भएको छैन भने मानिस अपूर्ण नै हुन्छ किनकि गुरुले नै संसार सागरबाट तारेर हामीलाई मोक्षको भागीदार बनाउनुहुन्छ, हामीलाई असीम आनन्दबाट तृप्त गरेर पूर्ण गरिदिनुहुन्छ। यसप्रकार पूर्णता, मुक्ति अनि अनगिन्ती सिद्धि र शक्ति प्रदान गर्नुहुने दुई सद्‌गुरुदेवहरूलाई सिद्धाश्रम शक्ति केन्द्रले धारण गरिरहेको छ। गुरुहरूको महिमा, गरिमा र परिचय कसले पो दिन सक्छ र ? तैपनि सामान्य जानकारीसम्मका लागि महान् गुरुहरूको संक्षिप्त परिचय दिएका छौँ–

## परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज

*वन्दे नारायणं देवं सद्‌गुरुं निखिलेश्वरं ।*
*ज्ञानामृतरसेनैव पूतं येनाखिलं जगत् ॥*

यस विश्व ब्रह्माण्डलाई भौतिक एवं आध्यात्मिकरूपले सन्तुलित राख्न प्रकृतिद्वारा निर्मित अद्वितीय तपस्थली नै सिद्धाश्रम हो । मानव जीवनको अन्तिम ध्येय यस सिद्धाश्रमका प्राणाधार परमपूज्य सद्‌गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज हुनुहुन्छ। आफ्ना गुरु स्वामी सच्चिदानन्दज्यूको आदेश शिरोपर गरी 'धर्मसंस्थापनार्थाय...'को शंखघोष गर्दै उहाँ सन् १९३३ अप्रिल २१ तारीखमा भारतस्थित राजस्थान प्रान्तको जोधपुरमा अवतरित हुनुभयो । वेदाध्ययनबाट शिक्षा शुरु गर्नुभएका उहाँको विवाह बाह्र वर्षको उमेरमा भगवती देवीसँग भयो। आफ्नो जीवन परिवारको लागि मात्र नभएर सम्पूर्ण समाजको लागि हो भन्दै विवाहपश्चात् उहाँले थुप्रै वर्ष हिमालयका गुफा, विकट कन्दरा र जंगलहरूमा संन्यास जीवन बिताउनुभयो। त्यसबेला उहाँले विभिन्न स्वामी, संन्यासी, योगी, तान्त्रिक, मान्त्रिक, आयुर्वेदाचार्यहरूसँग भेटेर विभिन्न विधामा आफूलाई निष्णात् बनाउनुभएको थियो । संन्यास जीवनपश्चात् पुन: गृहस्थमा फर्केर आफूले प्राप्त गरेको आध्यात्मिक ज्ञानलाई समाजमा फैलाउने कार्य गर्नुभयो। यसको लागि सयौं पुस्तकहरूको रचना गर्दै असंख्य शिविर सञ्चालन गरी साधना, प्रवचन र दीक्षाको माध्यमबाट शिष्य निर्माण प्रक्रियालाई जोड दिनुभयो। यसरी ज्योतिष, सामुद्रिक शास्त्रका सुविज्ञ ज्ञाता, तन्त्र-मन्त्रका अन्तिम नाम, आधुनिक धन्वन्तरि, सम्मोहन विज्ञानका मसीहा, कुण्डलिनी शक्तिका सहज व्याख्याकार, सूर्य विज्ञानका अपूर्व ज्ञानी, धुरन्धर रत्न चिकित्सक आदिका रूपमा उहाँ **डा. नारायणदत्त श्रीमाली**को नामबाट विश्वमा विख्यात् हुँदै महामहोपाध्याय, मन्त्र शिरोमणि, समाज शिरोमणि, जगद्‌गुरु आदिको संज्ञाले विभूषित हुनुभयो। आगामी गोरक्ष निखिल युग निर्माणको महायोजना आफ्ना शिष्यहरूको काँधमा सुम्पेर सन् १९९८ जुलाई ३ मा महाप्रयाण लिई उहाँ आफ्नो मूल स्थान सिद्धाश्रम फर्कनुभयो। हाल सद्‌गुरुदेवकै सूक्ष्म आदेश निर्देशनबमोजिम सिद्धाश्रम शक्ति केन्द्र यस महान् योजनामा कटिबद्ध छ ।

## श्री श्री महायोगी गुरु गोरखनाथ

*अनन्त कोटि ब्रह्माण्ड गोरक्ष स चराचरम् ।*
*दर्शनम् मुक्ति लाभं च तस्मै श्री गोरक्ष नमः ॥*

श्री श्री महायोगी गुरु गोरखनाथ सम्पूर्ण गुरुहरूमा महागुरु, सम्पूर्ण योगीहरूमा महायोगी, सम्पूर्ण नाथहरूमा महानाथ हुनुहुन्छ। महायोगी श्री श्री गुरु गोरखनाथ भगवान् शिवका सबैभन्दा महत्त्वपूर्ण र प्रमुख अवतारको रूपमा पूजित हुनुहुन्छ । योग मार्गको प्रचारको लागि भगवान् शिवले नै गोरक्ष रूप धारण गर्नुभएको हो । यसैले उहाँलाई श्री शिव गोरक्षको रूपमा आदर-सम्मान गर्ने गरिन्छ । गो शब्दको अर्थभित्र समाहित गाई, पृथ्वी, इन्द्रिय, आदि सम्पूर्णको रक्षा गर्ने गोरक्ष नै हुनुहुन्छ। श्रीमद्भागवत, नारदपुराण, स्कन्दपुराण, ब्रह्माण्डपुराण, शिवपुराण, शाक्तप्रमोद, गोरक्षगीता आदिमा उहाँको बारेमा उल्लेख भएको छ। विश्वको इतिहासलाई हेर्दा उहाँको प्राकट्य सयौँ हजारौँ वर्षको अन्तरालमा विभिन्न स्थानमा भएको पाइन्छ। यसबारे विभिन्न विद्वान्‌हरूले थुप्रै अनुसन्धान गरेका छन्। आमाको कोखबाट नभई आवश्यकता अनुसार आफै प्रकट हुनुहुने महायोगी अजर अमर कायायुक्त हुनुभएको कुरा स्पष्ट हुन्छ ।

नेपालको सन्दर्भमा हेर्दा गोरखा राज्यको नामाकरण उहाँको नामबाट भएको पाइन्छ भने उहाँकै आशीर्वादबाट यो राष्ट्र कहिल्यै पराधीन बन्नु नपरेको गौरवशाली इतिहास रहेको छ। उहाँको ऋण चुकाउन पनि हामीले उहाँको भक्ति गर्नैपर्दछ। नाथपंथका अग्रज महानाथ गुरु गोरखनाथ नेपालका राष्ट्रगुरु हुनुहुन्छ। नेपालमा विभिन्न ठाउँमा उहाँका मठ-मन्दिरहरू छन् जस्तै गोरखाको गोरख गुफा, पशुपतिको मृगस्थली पीठ, हनुमानढोकाको काष्ठमण्डप आदि । सिद्धाश्रम शक्ति केन्द्रको अनुसन्धानअनुसार गुरु गोरखनाथ सर्वप्रथम यस धरतीमा वैशाख शुक्ल पूर्णिमाको दिन गोरखाको गोरख गुफामा प्रकट हुनुभएको थियो । नेपालमा मात्र नभएर विश्वभर उहाँको सम्प्रदाय, मन्दिर एवं मठहरू स्थापित छन्। आगामी गोरक्ष निखिल युग निर्माणको लागि गोरक्ष शक्ति जगाउँदै नाथ परम्परालाई समाजमा स्थापित गर्न सिद्धाश्रम शक्ति केन्द्र गतिशील छ ।

# सिद्धाश्रम शक्ति केन्द्र

## (आध्यात्मिक शक्ति अनुसन्धान संस्था)

सिद्धाश्रम शक्ति केन्द्र, आध्यात्मिक शक्ति अनुसन्धान संस्थाको स्थापना ०५६ वैशाख ८ गते भएको हो तथा विधिवत् दर्ता ०५६ वैशाख २३ गते भयो । परमपूज्य सद्गुरुदेवहरू श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजलाई गुरुरूपमा धारण गर्दै यो संस्था शुरुमा केही वर्ष काठमाडौंको कमलादीबाट सञ्चालन भयो । त्यसपछि बत्तीसपुतली, पुरानो बानेश्वर हुँदै संचालन भएको यस संस्थाको केन्द्रीय कार्यालय हाल बसुन्धरामा रहेको छ ।

समस्त भूमण्डललाई गोरक्ष निखिल ऊर्जाले आपूरित गर्दै गोरक्ष निखिल युग स्थापनार्थ अघि बढिरहेको यस संस्थाले विभिन्न आध्यात्मिक गतिविधिहरूलाई अघि बढाइरहेको छ । मुलुकभर विभिन्न सम्पर्क कार्यालयहरूमार्फत आफ्ना गतिविधिहरू अघि बढाइरहेको यस संस्थाले विभिन्न ठाउँमा स-साना एकाइहरूको गठन गरेर पनि समाजमा आध्यात्मिक गतिविधिलाई अघि बढाइरहेको छ । संस्थाका विभिन्न सम्पर्क कार्यालयहरूमा बिहीबारको गुरु पूजन, दिव्य गुरु महोत्सव, विभिन्न चाडपर्वमा पूजनादि कार्यक्रमहरू सम्पन्न भइरहेका छन् भने विदेशमा रहेका यससँग सम्बन्धित एकाइहरूले पनि आध्यात्मिक गतिविधिमार्फत विश्वमा आध्यात्मिक शीतलता छरिरहेका छन् ।

संस्थाले प्रत्येक महिना काठमाडौं उपत्यकालगायत अन्य स्थानहरूमा रहेका विभिन्न शक्तिपीठ र मन्दिरहरूमा तान्त्रोक्त हवनहरू सञ्चालन गर्दै आइरहेको छ भने प्रत्येक वर्ष यस संस्थाले गोरखास्थित गोरख गुफामा श्री श्री महायोगी गुरु गोरखनाथको चरणकमलमा सवालाख रोट चढाउँदै आइरहेको छ । यसका अतिरिक्त कैयौं मन्त्र हवन साधना, तान्त्रोक्त साधना, ध्यान, महोत्सव आदिका कार्यक्रमहरू सञ्चालन गरिसकेको छ भने गोरक्ष निखिल वाणी मासिकलाई निरन्तररूपमा प्रकाशित गरिरहेको छ । एकातिर आध्यात्मिक पत्रिकामार्फत संस्थाले आध्यात्मिक गतिविधिलाई समाजसामु लगिरहेको छ भने अर्कोतिर गोरक्ष निखिल सन्देश नामक साप्ताहिक रेडियो कार्यक्रमबाट पनि यसले आफ्नो अभियानलाई तीव्र बनाइरहेको छ । समाजमा योग्य, सबल, चरित्रवान् नागरिकहरूको उत्पादनका लागि शैक्षिक मिशनअन्तर्गत गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रम सञ्चालन गरिरहेको यस संस्थाका विभिन्न तह र तप्कामा रहेका कार्यकर्ताहरूका लागि मासिक प्रशिक्षण तथा तालिमको पनि व्यवस्था हुँदै आएको छ ।

हाल अ.ना.प. शैली अपनाएर अगाडि बढिरहेको यो संस्थाको सांगठनिक स्वरूपअन्तर्गत सम्पर्क कार्यालयहरूको सञ्चालन भइरहेको छ भने यसै शैलीभित्र क्षेत्रीय कार्यालयहरूको पनि विकास भइरहेको छ । संस्थाको विकास र विस्तार हुने क्रममा कतिपय सम्पर्क कार्यालयका आफ्नै भवन बनिसकेका छन् भने कतिपयमा भवनका लागि जग्गाको व्यवस्था भइसकेको छ । थुप्रै सम्पर्क कार्यालयहरूमा विभिन्न स्तरका ध्यानका कार्यक्रमहरूका अतिरिक्त परामर्श सेवालगायत तान्त्रिक हिलिङ्ग पनि सञ्चालन भइरहेका छन् । यसप्रकार यो केन्द्रले आध्यात्मिक युग निर्माणको दिशामा अग्रणी भूमिका निर्वाह गरिरहेको छ ।

# आत्मिक निवेदन

*आत्मीय पाठकवर्ग,*

***'गोरक्ष निखिल वाणी' पत्रिका यहाँहरुलाई कस्तो लागिरहेको छ? अनेक बाधा, अड्चन एवं समस्याहरुका बावजुद पत्रिकालाई निरन्तरता दिँदै प्रबुद्ध पाठकहरुको कसीमा आफूलाई घोट्दै शुद्धता एवं स्तरीयतामा क्रमशः वृद्धि गर्दै जाने हाम्रो संकल्प एवं प्रयास रहँदै आएको छ। भौतिकतामा चुर्लुम्म डुबेको आजको समाजमा एउटा आध्यात्मिक पत्रिकालाई नियमितता दिनु र आफ्नो खुट्टामा उभिन सक्ने बनाउनु भनेको निश्चय पनि असम्भवजस्तो लाग्दछ। तर परमपूज्य सद्गुरुदेवहरुको आशीर्वादले यो असम्भवलाई सम्भव बनाउने कार्य तपाईंहरुबाटै भइसकेको छ। पत्रिकालाई युगौं-युगसम्म जीवन्त राखी आउँदो पुस्तालाई हाम्रो आध्यात्मिक धरोहरको रुपमा हस्तान्तरण गर्ने जिम्मेवारी पनि तपाईं, हाम्रै काँधमा आएको छ।***

***प्रत्येक व्यक्ति स्वयं आध्यात्मिक पथमा अग्रसर भई आफ्नो परिवार, टोल, छिमेक, समाज, गाउँ, सहर, जिल्ला, अञ्चल हुँदै सम्पूर्ण देश अनि सम्पूर्ण विश्वलाई नै अध्यात्ममय बनाउने महान् अभियानलाई मूर्तरुप दिन पत्रिका सबैभन्दा सशक्त माध्यम बन्न सक्छ। अतः पत्रिका सदस्यता विस्तारको कार्यक्रममा यहाँहरुको सहयोगको अपेक्षा गर्दछौं।***

***पत्रिकाको बिक्री मूल्य रू. ३०।- मात्र भएकोले तपाईंले कम्तीमा दसवटा पत्रिका मगाएर आफ्ना नाता-गोता, छरछिमेकमा बाँड्न सक्नुहुन्छ। तपाईंको घर, टोल, छिमेक वा नातागोतामा कहीं पनि पूजा-आजा, हवन, विवाह, व्रतबन्ध, सप्ताह, जन्मदिन, मेला, पर्व, महोत्सव आदि हुँदैछन् भने त्यहाँ पत्रिकाको स्टल राखेर यसको महत्त्वबारे जानकारी गराउनुका साथै वार्षिक सदस्यताको लागि प्रेरित गर्न सक्नुहुन्छ।***

***यसका अलावा टाढा-टाढा रहेका आफ्ना नाता-गोता, मित्रजनलाई हुलाकमार्फत पत्रिका पठाउन सक्नुहुन्छ। यसो गर्दा आत्मिक सम्बन्ध अझ प्रगाढ हुन जान्छ।***

***यो पत्रिका यहाँहरुको आफ्नै भएकोले यसलाई फलाउने, फुलाउने र फैलाउने जिम्मा पनि यहाँहरुकै हो। यसैले, सम्पूर्ण पाठकहरुमा हाम्रो आत्मिक निवेदन छ– आफूलगायत कम्तीमा पाँचजना वार्षिक सदस्य बनाउने संकल्प आजकै दिनदेखि गरौं।***

***यहाँहरु सबैको सहयोगले पत्रिकाको सदस्य सङ्ख्या निरन्तररुपमा वृद्धि हुँदै जानेछ जसले गर्दा पत्रिकालाई अझ स्तरीय एवं आकर्षक बनाउन मद्दत मिल्नेछ भन्ने कुरामा हामी विश्वस्त छौं।***

***वार्षिक सदस्यताको लागि रु. ३५०।- (अक्षरेपी रु. तीन सय पचास मात्र) हामीलाई पठाउनुहोस्। त्यसपछिको बाँकी काम हामी गर्नेछौं।***

***अन्तमा, आत्मीय पाठकवर्गहरुमा विनम्र अनुरोध छ कि पत्रिकाको स्वयंले अध्ययन गरौं एवं आफ्नो परिवार तथा इष्टमित्रलाई पनि पढ्न अनुरोध गरौं। यसका अलावा अन्य पाँचजना व्यक्तिलाई पढाउने प्रयास गरौं।***

***संसारको सबैभन्दा ठूलो दान ज्ञान दान हो, तपाईंको सानो दानले कसैको जीवनमा नयाँ मोड आउन सक्छ, जीवनमा सदाबहार छाउन सक्दछ। त्यसैले परमपूज्य सद्गुरुदेवहरुको महान् योजनालाई मूर्तरुप दिँदै चरितार्थ गराउन आजदेखि गुरु कार्यमा सहभागी बनौं र यस योजनालाई आ-आफ्नो तरीकाबाट सहयोग गरौं।***

***पत्रिकाको बिक्री हाम्रो उद्देश्य होइन, अपितु परमपूज्य सद्गुरुदेवहरुको असीम अनुकम्पाले प्रत्येक जन-जनमा गोरक्ष निखिल ऊर्जाको सञ्चार गरी आध्यात्मिक युगको पुनः निर्माण गर्नु हो। अस्तु।***

# गौमाता

'गावो विश्वस्य मातरः' अर्थात् गाई चराचर जगत्की आमा हुन् । अखिल विश्वको आधार भनेकै गौमाता हुन् । यसैले गाईको पूजा एवं सेवाले सम्पूर्ण देवीदेवताको आराधना हुन जान्छ । सम्पूर्ण विश्व-चराचर-जगत्का जड-चेतन सबै अवयवहरूका अधिष्ठातृ देवता हुन्छन् र यी सबै देवीदेवताहरूको निवास गौमातामा हुने हुनाले गाई विश्वरूप हुन् ।

**वेदमा गौको स्वरुप निरुपण–**

**प्रजापतिश्च परमेष्ठी च शृङ्गे इन्द्रः शिरो अग्निर्ललाटं यमः कृकाटम् ॥ सोमो राजा मस्तिष्को द्यौरूत्तरहनुः पृथिव्यधरहनुः ॥ विद्युज्जिह्वा मरूतो दन्ता रेवतीर्ग्रीवाः कृत्तिका स्कन्धा घर्मो वहः ॥ विश्वं वायुः स्वर्गो लोकः कृष्णद्रं विधरणी निवेष्यः ॥ श्येनः क्रोडोऽन्तरिक्षं पाजस्यं बृहस्पतिः ककुद् बृहतीः कीकसाः ॥ देवानां पत्नीः पृष्टय उपसदः पर्शवः ॥ मित्रश्च वरूणश्चांसौ त्वष्टा चार्यमा च दोषणी महादेवो बाहू ॥ इन्द्राणी भसद् वायुः पुच्छं पवमानो बालाः ॥ ब्रह्म च क्षत्रं च श्रोणी बलमूरु ॥**

प्रजापति र परमेष्ठी गाईका सिंग हुन्, इन्द्र शिर, अग्नि ललाट र यम घाँटीका सन्धि हुन् । नक्षत्रहरूका राजा चन्द्रमा मस्तिष्क, द्युलोक माथिल्लो हनु (चिउँडो) र पृथ्वी तल्लो हनु (चिउँडो) हुन् । विद्युत् जिब्रो, मरुत् देवता दाँत, रेवती नक्षत्र घाँटी, कृत्तिका काँध र ग्रीष्म ऋतु काँधका हड्डी हुन् । वायु देवता गाईका समस्त अङ्ग हुन्, यिनको लोक स्वर्ग हो र पृष्ठवंशको हड्डी रुद्र हुन् । श्येन पक्षी (बाज) यिनको छाती, अन्तरिक्ष बल, बृहस्पति ककुद् (जुरो) र बृहती नामक छन्द छातीका हड्डीहरू हुन् । देवाङ्गनाहरू पीठ र उनीहरूका परिचारिकाहरू करङहरू हुन् । मित्र र वरुण नामका देवता कन्धा हुन् । त्वष्टा र अर्यमा हत्केला र महादेव भुजा हुन् । इन्द्रपत्नी पछाडिको भाग हुन्, वायु देवता पुच्छर र पवमान रौँहरू हुन् । ब्राह्मण र क्षत्रिय यिनका नितम्ब र बल जाँघ हुन् ।

**धाता च सविता चाष्ठीवन्तौ जङ्घा गन्धर्वा अप्सरसः कुष्ठिका अदितिः शफाः ॥**

**चेतो हृदयं यकृन्मेधा व्रतं पुरीतत् ॥**

**क्षुत्कुक्षिरिरा वनिष्ठुः पर्वताः प्लाशयः ॥**

विधाता र सविता घुँडाका हड्डीहरू हुन्, गन्धर्व पिँडौला, अप्सराहरू साना हड्डीहरू र देवमाता अदिति खुर हुन्। चित्त हृदय, बुद्धि यकृत् र व्रत नै पुरीतत् नामका नाडी हुन् । भोक नै पेट, देवी सरस्वती आन्द्रा र पर्वत भित्री भाग हुन् ।

---

*दुराचारीले पनि जुन बेला कुनै स्त्रीलाई 'आमा' भन्छ, त्यतिबेला तत्काल उसको दृष्टिमा पवित्रता छाउँछ । कसैलाई आमा भन्नुको तात्पर्य नै उसलाई पवित्रताले हेर्नु हो । गाईलाई माता भन्नुको अर्थ यही हो कि यिनलाई हामी पूज्य एवं पवित्र दृष्टिले हेरौँ । 'गाई हाम्रो परम पूजनीय, वन्दनीय एवं पालनीय आमा हुन्'– यस भावलाई हामीले सदा जाग्रत राख्नुपर्छ । इन्द्रादि देवगण जीवित र जाग्रत गौमाताको शरीरमा छन् । जहाँ इन्द्रादि देव रहन्छन् त्यहीँ स्वर्ग छ अर्थात् गाई नै स्वर्गलोक हो।*

---

**क्रोधो वृक्कौ मन्युराण्डौ प्रजा शेपः ॥**

**नदी सूत्री वर्षस्य पतयः स्तनाः स्तनयित्नुरूधः ॥**

**विश्वव्यचाश्चर्मौषधयो लोमानि नक्षत्राणि रूपम् ॥**

**देवजना गुदा मनुष्या आन्त्राण्यत्रा उदरम् ॥**

**रक्षांसि लोहितमितरजना ऊबध्यम् ॥**

**अभ्रं पिबो मज्जा निधनम् ॥**

**अग्निरासीन उत्थितोऽश्विना ॥**

**इन्द्रः प्राङ् तिष्ठन् दक्षिणा तिष्ठन् यमः ॥**

क्रोध मिर्गौला, मन्यु (शोक) अण्डकोश र प्रजा जननेन्द्रिय हुन् । नदी गर्भाशय, वर्षाका अधिकारी देव स्तन हुन् तथा गडगडाहट गर्ने बादल नै दुग्धकोष हुन् । विश्वव्यापिनी शक्ति छाला, औषधिहरू रौं र नक्षत्र यिनका रूप हुन् । देवगण गुदा, मनुष्य आन्द्रा एवं यक्ष पेट हुन् । राक्षस रुधिर एवं अन्य प्राणी आमाशय हुन् । आकाश स्थूलता र मृत्यु मज्जा हुन् । बस्दाखेरि यिनी अग्निरूप हुन् र उठ्दा अश्विनीकुमार । पूर्वतिर उभिँदाको समयमा इन्द्र र दक्षिणतिर

# गोमती विद्या

गोमतीं कीर्तयिष्यामि सर्वपापप्रणाशिनीम् ।
तां तु म वदतो विप्र शृणुष्व सुसमाहितः ॥
गावः सुरभयो नित्यं गावो गुग्गुलगन्धिकाः ।
गावः प्रतिष्ठा भूतानां गावः स्वस्त्ययनं परम् ॥
अन्नमव परं गावो देवानां हविरुत्तमम् ।
पावनं सर्वभूतानां रक्षन्ति च वहन्ति च ॥
हविषा मन्त्रपूतेन तर्पयन्त्यमरान् दिवि ।
ऋषीणामग्निहोत्रेषु गावो होमे प्रयोजिताः ॥
सर्वेषामेव भूतानां गावः शरणमुत्तमम् ।
गावः पवित्रं परमं गावो मङ्गलमुत्तमम् ॥
गावः स्वर्गस्य सोपानं गावो धन्याः सनातनाः ।
(ॐ) नमो गोभ्यः श्रीमतीभ्यः सौरभेयीभ्य एव च ॥
नमो ब्रह्मसुताभ्यश्च पवित्राभ्यो नमो नमः ।
ब्राह्मणाश्चैव गावश्च कुलमेकं द्विधा स्थितम् ॥
एकत्र मन्त्रास्तिष्ठन्ति हविरेकत्र तिष्ठति ।
देवब्राह्मणगोसाधुसाध्वीभिः सकलं जगत् ॥
धार्यते वै सदा तस्मात् सर्वे पूज्यतमाः सदा ।
यत्र तीर्थे सदा गावः पिबन्ति तृषिता जलम् ।
उत्तरन्ति पथा येथ स्थिता तत्र सरस्वती ॥
गवां हि तीर्थे वसतीह गङ्गा
पुष्टिस्तथा तद्रजसि प्रवृद्धा ।
लक्ष्मीः करीषे प्रणतौ च धर्मस्–
तासां प्रणामं सततं च कुर्यात् ॥
(विष्णुधमोत्तरपु०, द्वि०खं० ४२ । ४९–५८)

उभिँदाखेरि यमराज हुन् ।

**प्रत्यङ् तिष्ठन् धातोदङ् तिष्ठन्त्सविता ॥**
**तृणानि प्राप्तः सोमो राजा ॥**

पश्चिमतिर उभिँदा विधाता र उत्तरतिर उभिँदा यिनै सविता हुन् । घाँस खाँदै गर्दा यिनी नक्षत्रहरूका राजा चन्द्रमा हुन् ।

**मित्र ईक्षमाण आवृत्त आनन्दः ॥ युज्यमानो वैश्वदेवो युक्तः प्रजापतिर्विमुक्तः सर्वम् ॥ एतद्वै विश्वरूपं सर्वरूपं गोरूपम् ॥ उपैनं विश्वरूपाः सर्वरूपाः पशवस्तिष्ठन्ति य एवं वेद ॥**

(अथर्व ९।७१–२६)

हेर्दाखेरि यिनी मित्र देवता हुन् र पीठ फर्काउँदाखेरि आनन्द हुन् । हलो तथा गाडामा जोत्ने बेला यिनी विश्वेदेव (गोरु), जोत्दा प्रजापति हुन् । खोलिएको अवस्थामा यिनी सबै कुरा बन्दछिन् । यिनै विश्वरूप एवं सर्वरूप हुन् र यिनी गोरूप पनि हुन् । जसलाई यस विश्वरूपको यथार्थ ज्ञान हुन्छ, ऊसँग विविध आकारका अन्य पशु पनि हुन्छन् ।

यस सूक्तमा गाई तथा गोरुलाई विश्वरूप बताइएको छ । जसरी भगवद्गीतामा भगवान् श्रीकृष्णले आफ्नो विश्वरूपको वर्णन गर्नुभएको छ, त्यसरी नै गाईको विश्वरूपको वर्णन यस सूक्तमा पाइन्छ । संस्कृतका प्रसिद्ध पाश्चात्य विद्वान् ग्रिफिथ भन्दछन् कि यस सूक्तमा आदर्श गोरु र गाईको प्रशंसा गरिएको छ ।

यस सूक्तमाथि धेरै प्रकारले विचार गर्न सकिन्छ । तर यहाँ एक-दुई प्रमुख कुरालाई नै केलाइन्छ किनभने सम्पूर्ण सूक्तका सबै अंशमा विचार गर्ने कुनै आवश्यकता छैन । यस सूक्तका विचारणीय अंश निम्न छन्–

१) ब्राह्मण र क्षत्रिय विश्वरुपिणी गाईका नितम्ब हुन् । (मन्त्र ९)

२) गन्धर्व पिँडौला र अप्सराहरू साना हड्डीहरू हुन् । (मन्त्र १०)

३) देवता यिनका गुदा हुन्, मनुष्य आन्द्रा र अन्य प्राणी आमाशय हुन् । (मन्त्र १६)

४) राक्षस रक्त एवं इतर मनुष्य पेट हुन् । (मन्त्र १७)

उपर्युक्त मन्त्रहरूमा यो भाव देखाइएको छ कि ब्राह्मण, क्षत्रिय तथा इतर अर्थात् वैश्य, शूद्र, निषाद, गन्धर्व, देवता, अप्सराहरू, मनुष्य मात्र, राक्षस एवं अन्य सबै प्राणी गौरूप नै हुन् । हामी सबै मनुष्य गौमाताकै अंश हौँ भन्ने कुरा सम्पूर्ण मानिसले हृदयदेखि नै बुझ्नु आवश्यक छ । यसैले यस मन्त्रको अवतारणा गरिएको छ । यसप्रकार हामीहरूले गौमाताको शरीरसँग आफ्नो एकरूपता देख्न सिकौँ । गाईको शरीरमा कष्ट हुँदा त्यो कष्ट हामीलाई नै हुनेछ– यो भाव मनमा धारण गरौँ । यदि कुनै मानिसले गाईलाई कष्ट दिन्छ भने वा काट्छ भने अथवा अन्य कुनै प्रकारले दुःख दिन्छ भने उसले केवल गाईलाई मात्र दुःख पुऱ्याउने नभई यसबाट हामीलाई धेरै असर गर्छ, हामी सुखी रहन सक्ने छैनौँ । गाईसँग हाम्रा अवयवी र अवयवको सम्बन्ध छ । हामी गाईका नै अङ्ग हौँ । यसैले जुन दुःख गाईलाई मिल्छ, त्यही हामीलाई मिल्दछ– यस्तो भावनाले गाईको पालन तथा रक्षण गर्नुपर्दछ । अर्को शब्दमा भन्ने हो भने आफूमाथि दुःख आउँदा जुन लगनका साथ त्यसको प्रतिकार गरिन्छ, त्यस्तै तीव्रताका साथ गाईको कष्टलाई हटाउने प्रयास गर्नुपर्दछ ।

गाई केवल दूध दिने पशु मात्र होइनन्, प्रत्युत यिनी आफ्ना कुटुम्बकी हकदार हुन् । यस्तो पनि भन्न सकिन्छ

कुनै मानिसले गाईलाई कष्ट दिन्छ भने वा काट्छ भने अथवा अन्य कुनै प्रकारले दुःख दिन्छ भने उसले केवल गाईलाई मात्र दुःख पुऱ्याउने नभई यसबाट हामीलाई धेरै असर गर्छ, हामी सुखी रहन सक्ने छैनौं । गाईसँग हाम्रा अवयवी र अवयवको सम्बन्ध छ । हामी गाईका नै अंग हौं । यसैले जुन दुःख गाईलाई मिल्छ, त्यही हामीलाई मिल्दछ

यिनी मालिक हुन् र हामी यिनको परिवारका सदस्य हौँ– यो भाव मनमा सदा जीवित र जाग्रत रहनुपर्दछ ।

ब्राह्मण, क्षत्रिय, वैश्य, शूद्र, निषाद, राक्षस आदि सबै जातिमा यो विचार जाग्रत् रहनुपर्दछ । यस्तो हुँदा नै सम्पूर्ण जगतीतलमा गौमाताको पूजा हुन लाग्नेछ ।

यो सम्पूर्ण जगत् नै गौरूप अर्थात् गाईको रूप हो । यसैले गाईसित कुनै एउटा मात्र पदार्थको तुलना हुन सक्दैन । अन्य सबै पदार्थहरूलाई विविध उपमा दिन सकिन्छ तर गाई मात्रै यस्तो प्राणी हुन् जो अनुपम छन् किनकि गाई प्राणी मात्रका लागि निरूपम माता हुन्, मानव वंशको पालन गर्ने र मानव मात्र उनको अवयव हुन् । गाईको उपकारको मनन गर्ने हो भने वेदको यो कथन ठीक प्रकारले हामीले बुझ्न सक्नेछौँ ।

माथिको वर्णनबाट वेदले के शिक्षा दिन खोजेको हो भन्ने प्रश्न पनि उब्जन सक्छ । यस प्रश्नको उत्तरमा निवेदन छ कि वेदले यस सूक्तद्वारा अहिंसाको उत्तमोत्तम उपदेश दिएको छ । मनुष्य त के, कुनै प्राणीले पनि कहिल्यै आफ्नो हिंसा गर्दैन । सिंह वा अन्य हिंसक जन्तुले अरूलाई मारेर त खान्छ, राक्षसले पनि मनुष्यादि प्राणीहरूलाई खान्छ तर अरूको मासुमाथि निर्भर रहने यी क्रूर प्राणीले अति नै भोक लागे पनि आफ्नै शरीरका अवयवलाई कहिल्यै पनि खाँदैन ।

अत: यस स्वाभाविक प्रवृत्तिलाई लिएर नै वेदले मनुष्यलाई यस सूक्तद्वारा गाई अथवा गोरुको मासुबाट पूर्णतया निवृत्त गर्न खोजेको हो । यो कुरा माथिको वर्णनबाट स्पष्ट हुन्छ ।

सम्पूर्ण हृदयले मनुष्यले जब आफैलाई गाईको शरीरको अवयव मान्न थाल्नेछन् तब मानिसहरू गाई वा गोरुको मासु कसरी खान

**सम्पूर्ण जगत् नै गौरूप अर्थात् गाईको रूप हो । यसैले गाईसित कुनै एउटा मात्र पदार्थको तुलना हुन सक्दैन । अन्य सबैपदार्थहरूलाई विविध उपमा दिन सकिन्छ तर गाई मात्रै यस्तो प्राणी हो जो अनुपम छ ।**

सक्लान् किनकि कुनै पनि जीवले आफ्नो शरीरको मासु खाँदैन । अरूको त कुरै छाडौँ, नरमांसभोजी मनुष्य पनि आफ्नो शरीरको मासु खाँदैन । यसैले जसले आफूलाई गाईको शरीरको अवयव मान्छन्, ऊ निश्चय नै गोमांस-भक्षणबाट पूर्णतया निवृत्त हुन्छ ।

कति प्रबल युक्तिले वेदले मानिसहरूलाई मांसभोजी राक्षस-श्रेणीका मानिसहरूलाई पनि निराभिषभोजी बनाउने यत्न गरेको छ । यो यति प्रबल युक्ति हो कि यदि यस प्रकारको विचार मनमा सदाका लागि स्थिर भयो भने कहिल्यै कसैले पनि गाईको मासु खाने छैन । यति प्रबल युक्तिका बावजूद पनि कोहीकोही पाश्चात्य विद्वान् यस्तो मान्यता राख्छन् कि वैदिककालमा गोमांस र गोरुको मासु खाने प्रथा थियो । उनीहरूलाई हाम्रो प्रार्थना छ कि यस प्रबल युक्तिमाथि उनीहरूले विचारपूर्वक मनन गरुन् र यसपछि आफ्नो मत बनाऊन् ।

दुराचारीले पनि जुन बेला कुनै स्त्रीलाई 'आमा' भन्छ, त्यतिबेला तत्काल उसको दृष्टिमा पवित्रता छाउँछ । कसैलाई आमा भन्नुको तात्पर्य नै उसलाई पवित्रताले हेर्नु हो । गाईलाई माता भन्नुको अर्थ यही हो कि यिनलाई हामी पूज्य एवं पवित्र दृष्टिले हेरौँ । 'गाई हाम्रो परम पूजनीय, वन्दनीय एवं पालनीय आमा हुन्'– यस भावलाई हामीले सदा जाग्रत राख्नुपर्छ । इन्द्रादि देवगण जीवित र जाग्रत गौमाताको शरीरमा छन् । जहाँ इन्द्रादि देव रहन्छन् त्यहीं स्वर्ग छ अर्थात् गाई नै स्वर्गलोक हो– यही भाव पूर्वोक्त सूक्तको चतुर्थ मन्त्रमा भनिएको छ ।

गाईलाई आमा मान्नेहरूले गाईको शरीरमा नाना देवताहरूको निवास मान्दछन् । तर यी सबैलाई मान्दा

## गो सेवाबाट श्राद्धको फल

**जोसँग श्राद्धका लागि केही पनि हुँदैन, उसले यदि पितृहरुको ध्यान गरेर गाईलाई श्रद्धापूर्वक घाँस खुवाउँछ भने श्राद्धको फल मिल्छ- 'तृणानि वा गवे दद्यात् ।' (निर्णयसिंधु)**

मान्दै पनि उनीहरूको आचरण यस्तो देखिन्छ कि मानौं उनीहरू यी कुनै पनि मान्दैनन् । यसको कारण उनीहरूको धर्मविषयक अज्ञान नै हो । यदि वेदको यो उपदेश उनीहरूको मनमा जाग्रत रहन्छ भने उनीहरू गाईको रक्षा राम्ररी गर्न सक्दछन् । यस सूक्तमा गाईको जुन गौरवको वर्णन भएको छ, त्यस गौरव जुन कालमा जनताको मनमा रहेको थियो, त्यस कालमा गाईको वध असम्भव थियो– यस कुरालाई विस्तारपूर्वक बताउन पर्दैन होला ।

वेदहरूमा जस्तै विभिन्न इतिहास-पुराणहरूमा पनि गाईको विश्वरूपको बेग्लाबेग्लै वर्णन प्राप्त हुन्छन् जसमध्ये बृहत्पराशरस्मृति, पद्मपुराण, भविष्यपुराण, ब्रह्माण्डपुराण, स्कण्दपुराण, महाभारत मुख्य छन् ।

**बृहत्पराशरस्मृति**

**शृंगमूले स्थितो ब्रह्मा शृंगमध्ये तु केशवः ।**
**शृंगाग्रे शंकरं विद्यात् त्रयो देवाः प्रतिष्ठिताः ॥**
**शृंगाग्रे सर्वतीर्थानि स्थावराणि चराणि च ।**
**सर्वे देवाः स्थिता देहे सर्वदेवमयी हि गौः ॥**
**ललाटाग्रे स्थिता देवी नासामध्ये तु षण्मुखः ।**
**कम्बलाश्वतरौ नागौ तत्कर्णाभ्यां व्यवस्थितौ ॥**
**स्थितौ तस्याश्च सौरभ्याश्चक्षुषोः शशिभास्करौ ।**
**दन्तेषु वसवश्चाष्टौ जिह्वायां वरुणः स्थितः ॥**
**सरस्वती च हुंकारे यमयक्षौ च गण्डयोः ।**
**ऋषयो रोमकूपेषु प्रस्त्रावे जाह्नवीजलम् ॥**
**कालिन्दी गोमये तस्या अपरा देवतास्तथा ।**
**अष्टाविंशतिदेवानां कोटचो लोमसु ताः स्थिताः ॥**
**उदरे गार्हपत्योऽग्निर्हृदये दक्षिणस्तथा ।**
**मुखे चाहवनीयस्तु सभ्यावसथ्यौ च कुक्षिषु ॥**
**एवं यो वर्तते गोषु ताडनक्रोधवर्जितः ।**
**महतीं श्रियमाप्नोति स्वर्गलोके महीयते ॥**

(५।३४–४१)

गाईको सिंगको मूलमा ब्रह्माजी र दुवै सिंगको मध्यमा भगवान् नारायणको निवास छ। सिंगको शिरोभागमा भगवान् शिवको निवास छ। यसप्रकार यी तीनै देवता गाईको सिंगमा प्रतिष्ठित छन् । यस अतिरिक्त सिंगको अग्रभागमा चर तथा अचर सबै तीर्थ विद्यमान छन् । यसैप्रकार सबै देवता गाईको शरीरमा निवास गर्दछन् । अतः गाई सर्वदेवमयी हुन् । गाईको ललाटको अग्रभागमा देवी पार्वती तथा नाकको मध्यमा

## सपनामा गाई दर्शनको फल

**सपनामा गाई अथवा गोरूको दर्शनबाट कल्याण-लाभ एवं व्याधि-नाश हुन्छ, सपनामा गाई देख्नु शुभ लक्षण हो । यसरी नै सपनामा गाईको थुनलाई चुस्नु पनि श्रेष्ठ मानिन्छ । सपनामा घरमा गाई ब्याउनु, साँढे वा गोरूको सवारी हुनु, तलाउको बीचमा घिउ मिसिएको खीर खानु पनि उत्तम मानिन्छ । घिउसहितको खीरको भोजनलाई त राज्य प्राप्तिको सूचक मानिएको छ । सपनामा दुहेको ताजा दूधको पान गर्नेलाई अनेकौं भोगको प्राप्ति हुन्छ भनिएको छ । दही देख्नाले प्रसन्नताको प्राप्ति हुन्छ । सपनामा जो गोरू तथा साँढेयुक्त रथमा एक्लै सवार हुन्छ र त्यसै अवस्थामा बिउँझिन्छ भने उसलाई शीघ्र धनको प्राप्ति हुन्छ । सपनामा दहीको प्राप्तिले धनको, घिउको प्राप्ति र दही खानाले यशको प्राप्ति निश्चित हुन्छ । यसैप्रकार यात्रारम्भ गर्ने बेलामा दही र दूध देख्नु शुभ मानिन्छ । सपनामा दही-भातको भोजन गर्नाले कार्यसिद्धि हुन्छ तथा गोरूमा चढ्नाले द्रव्य लाभ हुन्छ एवं व्याधिबाट छुटकारा मिल्छ । यसैप्रकार सपनामा साँढे अथवा गाईको दर्शन गर्नाले कुटुम्बीहरूको वृद्धि हुन्छ । सपनामा कालो वस्तु देख्नु निन्द्य मानिन्छ तर कालो गाईको दर्शनलाई भने शुभ मानिन्छ ।**

**सपनामा सेतो गाई देख्दा चाँदी वा चिनीको व्यापारमा लाभ पुग्छ । कपिला गाई देख्दा पहेँला वस्तुको व्यापारमा र रातो गाईले रातो वस्तुको व्यापारबाट धन लाभ हुन्छ । छिरीबिरी रंगको गाई देख्दा करारको काममा लाभ मिल्छ । सपनामा बाच्छीलाई प्रेम गरिरहेको देखेमा संतान सुख मिल्छ । समागम गरिरहेको गाईको दर्शन सपनामा हुँदा पनि भावी संतान लाभको सूचना प्राप्त हुन्छ ।**

कुमार कार्तिकेयको निवास छ। गाईको दुवै कानमा कम्बल र अश्तर नामका दुई नाग निवास गर्दछन् र त्यस सुरभी गाईको दाहिने आँखामा सूर्य र बायाँ आँखामा चन्द्रमाको निवास छ । दाँतमा आठै वसु र जिब्रोमा भगवान् वरुण प्रतिष्ठित छन् । गाईको हुंकारमा भगवती सरस्वती निवास गर्दछिन् र गण्डस्थल (गाला) मा यम र यक्ष निवास गर्दछन्। गाईको सबै रोमकूपमा ऋषिगणहरूको निवास छ तथा गोमूत्रमा भगवती गङ्गाको पवित्र जलको निवास छ, गोमय (गोबर) मा भगवती यमुना तथा सबै देवता प्रतिष्ठित छन्। अट्ठाइस करोड देवता गाईको रोमकूपमा स्थित छन् । गाईको उदर-देशमा गार्हपत्य अग्निको निवास छ र हृदयमा दक्षिणाग्निको निवास छ। मुखमा आहवनीय नामको अग्नि तथा पेटमा सभ्य एवं आवसथ्य नामक अग्नि निवास गर्दछन्। यसप्रकार गाईको शरीरमा सबै देवताहरूको स्थिति बुझेर जसले कहिल्यै पनि गाईमाथि क्रोध गर्दैन तथा प्रताडना दिँदैन, उसले महान् ऐश्वर्यलाई प्राप्त गर्छ र स्वर्गलोकमा प्रतिष्ठा प्राप्त गर्छ।

### पद्मपुराण

**गोमुखे चाश्रिता वेदाः सषडङ्गपदक्रमाः ॥**
**शृंगयोश्च स्थितौ नित्यं सहैव हरकेशवौ ।**
**उदरेऽवस्थितः स्कन्दः शीर्षे ब्रह्मा स्थितः सदा ॥**
**वृषध्वजो ललाटे च शृंगाग्र इन्द्र एव च ।**
**कर्णयोरश्विनौ देवौ चक्षुषोः शशिभास्करौ ॥**
**दन्तेषु गरुडो देवो जिह्वायां च सरस्वती ।**
**अपाने सर्वतीर्थानि प्रस्रावे चैव जाह्नवी ॥**

**ऋषयो रोमकूपेषु मुखतः पृष्ठतो यमः ।**
**धनदो वरुणश्चैव दक्षिणं पार्श्वमाश्रितौ ॥**
**वामपार्श्वे स्थिता यक्षास्तेजस्वन्तो महाबलाः ।**
**मुखमध्ये च गन्धर्वा नासाग्रे पन्नगास्तथा ॥**
**खुराणां पश्चिमे पार्श्वेऽप्सरसश्च समाश्रिताः ।**
**गोमये वसते लक्ष्मीर्गोमूत्रे सर्वमङ्गला ॥**
**पादाग्रे खेचरा वेद्या हम्भाशब्दे प्रजापतिः ।**
**चत्वारः सागराः पूर्णा धेनूनां च स्तनेषु वै ॥**
**गां च स्पृशति यो नित्यं स्नातो भवति नित्यशः ।**
**अतो मर्त्यः प्रपुष्टैस्तु सर्वपापैः प्रमुच्यते ॥**
**गवां रजः खुरोद्भूतं शिरसा यस्तु धारयेत् ।**
**स च तीर्थजले स्नातः सर्वपापैः प्रमुच्यते ॥**

(सृष्टिखण्ड ५७।१५६–१६५)

छ वटै अङ्ग, पद र क्रमसहित सम्पूर्ण वेद गाईको मुखमा निवास गर्दछन्। यिनको सिंगमा भगवान् श्रीशंकर र श्रीविष्णु सदा विराजमान रहन्छन्। गाईको उदरमा कार्तिकेय, मस्तकमा ब्रह्मा, ललाटमा महादेव, सिंगको अग्रभागमा इन्द्र, दुवै कानमा अश्विनीकुमार, नेत्रमा चन्द्रमा र सूर्य, दाँतमा गरुड, जिह्वामा सरस्वती देवी, अपान (गुदा) मा सम्पूर्ण

## गोभक्तका लागि केही पनि दुर्लभ छैन

**गोषु भक्तश्च लभते यद् यदिच्छति मानवः ।**
**स्त्रियोऽपि भक्ता या गोषु ताश्च काममवाप्नुयुः ॥**
**पुत्रार्थी लभते पुत्रं कन्यार्थी तामवाप्नुयात् ।**
**धनार्थी लभते वित्तं धर्मार्थी धर्ममाप्नुयात् ॥**
**विद्यार्थी चाप्नुयात् विद्यां सुखार्थी प्राप्नुयात् सुखम् ।**
**न किंचिद् दुर्लभं चैव गवां भक्तस्य भारत ॥**

**(महा०, अनु० ८३।५०–५२)**

गोभक्तले जुन-जुन वस्तुको इच्छा राख्छन्, ती सबै उसलाई प्राप्त हुन्छन् । स्त्रीहरुले पनि गाईको भक्ति गर्दा मनोवाञ्छित कामनाहरु प्राप्त गर्छन् । पुत्रार्थी मनुष्य पुत्र पाउँछन् र कन्यार्थीले कन्या । धन चाहनेहरुले धन र धर्म चाहनेहरुलाई धर्म प्राप्त हुन्छ । विद्यार्थीले विद्या पाउँछन् र सुखार्थीले सुख । हे भारत (अर्जुन) ! गोभक्तका लागि यहाँ केही पनि दुर्लभ छैन ।

तीर्थ, मूत्रस्थानमा गङ्गा, रोमकूपमा ऋषि, मुख र पृष्ठभागमा यमराज, दक्षिण पार्श्वमा वरुण र कुबेर, वाम पार्श्वमा तेजस्वी र महाबली यक्ष, मुखभित्र गन्धर्व, नासिकाको अग्रभागमा सर्प, खुरको पछिल्ला भागमा अप्सराहरू स्थित छन् । गाईको गोबरमा लक्ष्मी, गोमूत्रमा सर्वमङ्गला भगवती पार्वती, चरणको अग्रभागमा आकाशचारी देवता, आवाजमा प्रजापति र थुनमा चारै समुद्र प्रतिष्ठित छन् । जसले प्रतिदिन स्नान गरेर गाईको स्पर्श गर्दछ, ऊ सबै प्रकारका पापहरूबाट मुक्त हुन जान्छ । जसले गाईको खुरबाट उडेको धूलोलाई शिरमा धारण गर्दछ, उसले मानौँ तीर्थका जलमा स्नान गरको ठहर्छ र सबै पापहरूबाट मुक्त हुन्छ ।

**भविष्यपुराण**

**शृंगमूले गवां नित्यं ब्रह्मा विष्णुश्च संस्थितौ ।**
**शृंगाग्रे सर्वतीर्थानि स्थावराणि चराणि च ॥**
**शिवो मध्ये महादेवः सर्वकारणकारणम् ।**
**ललाटे संस्थिता गौरी नासावंशे च षण्मुखः ॥**
**कम्बलाश्वतरौ नागौ नासापुटसमाश्रितौ ।**
**कर्णयोरश्विनौ देवौ चक्षुर्भ्यां शशिभास्करौ ॥**
**दन्तेषु वसवः सर्वे जिह्वायां वरुणः स्थितः ।**
**सरस्वती च कुहरे यमयक्षौ च गण्डयोः ॥**
**संध्याद्वयं तथोष्ठाभ्यां ग्रीवायां च पुरन्दरः ।**
**रक्षांसि ककुदे द्यौश्च पार्ष्णिकाये व्यवस्थिता ॥**
**चतुष्पात्सकलो धर्मो नित्यं जंघाषु तिष्ठत ।**
**खुरमध्येषु गन्धर्वाः खुराग्रेषु च पन्नगाः ॥**
**खुराणां पश्चिमे भागे राक्षसाः सम्प्रतिष्ठिताः ॥**
**रुद्रा एकादश पृष्ठे वरुणः सर्वसन्धिषु ॥**
**श्रोणीतटस्थाः पितरः कपोलेषु च मानवाः ।**
**श्रीरपाने गवां नित्यं स्वाहालंकारमाश्रिताः ॥**
**आदित्या रश्मयो बालाः पिण्डीभूता व्यवस्थिताः ।**
**साक्षद्गङ्गा च गोमूत्रे गोमये यमुना स्थिता ॥**
**त्रयस्त्रिंशद् देवकोटचो रोमकूपे व्यवस्थिताः ।**
**उदरे पृथिवी सर्वा सशैलवनकानना ॥**
**चत्वारः सागराः प्रोक्ता गवां ये तु पयोधराः ।**
**पर्जन्यः क्षीरधारासु मेघा विन्दुव्यवस्थिताः ॥**
**जठरे गार्हपत्योऽग्निर्दक्षिणाग्निर्हृदि स्थितः ।**
**कण्ठे आहवनीयोऽग्निः सभ्योऽग्निस्तालुनि स्थितः ॥**
**अस्थिव्यवस्थिताः शैला मज्जासु क्रतवः स्थिताः ।**
**ऋग्वेदोऽथर्ववेदश्च सामवेदो यजुस्तथा ॥**

(उत्तरपर्व ६९।२५–३७)

**गाईको गोबरमा लक्ष्मी, गोमूत्रमा सर्वमङ्गला भगवती पार्वती, चरणको अग्रभागमा आकाशचारी देवता, आवाजमा प्रजापति र थुनमा चारै समुद्र प्रतिष्ठित छन् । जसले प्रतिदिन स्नान गरेर गाईको स्पर्श गर्दछ, ऊ सबै प्रकारका पापहरूबाट मुक्त हुन जान्छ । जसले गाईको खुरबाट उडेको धूलोलाई शिरमा धारण गर्दछ, उसले मानौँ तीर्थका जलमा स्नान गरको ठहर्छ र सबै पापहरूबाट मुक्त हुन्छ ।**

**गौसेवाको अनन्त फल**

**गाश्च शुश्रूषते यश्च समन्वेति च सर्वशः।**
**तस्मै तुष्टाः प्रयच्छन्ति वरानपि सुदुर्लभान्॥**
**द्रुह्येन्न मनसा वापि गोषु नित्यं सुखप्रदः।**
**अर्चयेत सदा चैव नमस्कारैश्च पूजयेत्॥**
**दान्तः प्रीतमना नित्यं गवां व्युष्टिं तथाश्नुते।**
**(महा०, अनु० ८१।३३-३५)**

**जुन पुरुषले गाईको सेवा र सबै प्रकारले उनको अनुगमन गर्छन्, उनीमाथि सन्तुष्ट भएर गाईले उनलाई दुर्लभ वर प्रदान गर्दछिन्। मनबाट पनि कहिल्यै गाईसित द्रोह नगरून्, उनलाई सदा सुख पुऱ्याउन्, उनको यथोचित सत्कार गरून् र नमस्कार आदिद्वारा उनको पूजन गर्दै रहून्। जसले जितेन्द्रिय र प्रसन्नचित्त भएर नित्य गाईको सेवा गर्छ, ऊ समृद्धिको भागी बन्छ।**

## गो-ग्रास दानको महिमा

गोरु जगत्का पिता र गाई संसारकी माता हुन्। उनीहरुको पूजा गर्नाले समस्त पितृ र देवताहरुको पूजा हुन जान्छ। जसको गोबरले लिप्नाले सभा भवन, घर-आँगन, देवमन्दिर पनि शुद्ध हुन्छन्, ती गाईहरुभन्दा श्रेष्ठ प्राणी अरु को हुन सक्छ ? जसले एक वर्षसम्म स्वयं भोजन गर्नुभन्दा पहिले प्रतिदिन अरुको गाईलाई मुट्ठीभरि घाँस खुवाउँछ, उसलाई प्रत्येक समय गौसेवा गर्ने फल प्राप्त हुन्छ। (महा०, आश्वमेधिकमपर्व, वैष्णवधर्म०)

गाईको सिंगको मूलमा सदा ब्रह्मा र विष्णु प्रतिष्ठित छन्। सिंगको अग्रभागमा चराचर समस्त तीर्थ प्रतिष्ठित छन्। सबै कारणहरूका कारणस्वरूप महादेव शिव सिंगको मध्यमा प्रतिष्ठित छन्। गाईको ललाटमा गौरी, नासिकाको अस्थि भागमा भगवान् कार्तिकेय र नासिकाका दुवै प्वालमा कम्बल तथा अश्वतर नामक नागहरू प्रतिष्ठित छन्। दुवै कानमा अश्विनीकुमार, नेत्रमा चन्द्र र सूर्य, दाँतमा आठै वसुगण, जिह्वामा वरुण, कण्ठदेशमा सरस्वती, गण्डस्थलमा यम र यक्ष, ओठमा दुवै सन्ध्या, गलामा इन्द्र, ककुद् (जुरो) मा राक्षस, पार्ष्णिभागमा आकाश र जाँघमा चारै चरणमा सदा धर्म विराजमान रहन्छन्। खुरको मध्यमा गन्धर्व, अग्रभागमा सर्प एवं पश्चिम भागमा राक्षस गण प्रतिष्ठित छन्। गाईको पृष्ठदेशमा एकादश रुद्र, सबै सन्धिहरूमा वरुण, श्रोणितट (कम्मर) मा पितृ, गालामा मानव तथा अपानमा स्वाहा रूप अलंकारको आश्रय गरेर श्री अवस्थित छन्। आदित्यरश्मि केश समूहमा पिण्डीभूत भएर अवस्थित छन्। गोमूत्रमा साक्षात् गङ्गा र गोमयमा यमुना स्थित छन्। रोम समूहमा तेत्तीस करोड देवगण प्रतिष्ठित छन्। उदरमा पर्वत र जंगलका साथ पृथ्वी अवस्थित छन्। चारै थुनमा चारै महासमुद्र स्थित छन्। क्षीरधाराहरूमा पर्जन्य नामक देवता एवं क्षीरविन्दुहरूमा मेघ नामक देवता अवस्थित छन्। जठरमा गार्हपत्याग्नि, हृदयमा दक्षिणाग्नि, कण्ठमा आहवनीयाग्नि र तालुमा सभ्याग्नि स्थित छन्। गाईको अस्थिमा पर्वत र मज्जामा यज्ञ स्थित छन्। ऋग्वेद, यजुर्वेद, सामवेद तथा अथर्ववेद सबै वेद पनि गाईमा नै प्रतिष्ठित छन्।

**ब्रह्माण्डपुराण (गोसावित्री स्तोत्र)**

अखिल विश्वका पालक देवाधिदेव नारायण ! हजूरको चरणमा मेरो प्रणाम छ। पूर्वकालमा भगवान् व्यासदेवले बताउनु भएको गोसावित्री स्तोत्रलाई सुनाउँछु। यो गाईको स्तोत्र समस्त पापलाई नाश गर्ने, समस्त अभिलषित पदार्थहरूलाई दिने, दिव्य एवं समस्त कल्याण गर्ने छ। गाईको सिंगको अग्रभागमा साक्षात् जनार्दन विष्णुस्वरूप भगवान् वेदव्यास रमण गर्दछन्। सिंगको जडमा देवी पार्वती र सिंगको मध्य भागमा भगवान् सदाशिव विराजमान रहन्छन्। गाईको मस्तकमा ब्रह्मा, काँधमा बृहस्पति, ललाटमा वृषभारुढ भगवान् शंकर, कानमा अश्विनीकुमार तथा नेत्रमा सूर्य र चन्द्रमा रहन्छन्। दाँतमा समस्त ऋषिगण, जिब्रोमा देवी सरस्वती तथा वक्षस्थलमा एवं पिँडौलामा सारा देवता निवास गर्दछन्। गाईको खुरको मध्य भागमा गन्धर्व, अग्रभागमा चन्द्रमा एवं भगवान् अनन्त तथा पछिल्लो भागमा प्रमुख अप्सराहरूको स्थान छ। गाईको पछिल्लो भाग (नितम्ब) मा पितृगण तथा भृकुटीमा तीनै गुणको निवास बताइएको छ। गाईका रोमकूपहरूमा ऋषिगण तथा छालामा प्रजापति निवास गर्दछन्। गाईको थूहेमा नक्षत्रहरूसहित द्युलोक, पीठमा सूर्यतनय यमराज, अपानदेशमा

सम्पूर्ण तीर्थ एवं गोमूत्रमा साक्षात् गङ्गा विराज गर्दछिन् । गाईको दृष्टि, पीठ एवं गोबरमा स्वयं लक्ष्मी निवास गर्दछिन्, नाकमा अश्विनीकुमारहरू एवं ओठमा भगवती चण्डिकाको वास छ । गाईको स्तन जलले पूर्ण चारै समुद्र हुन्, गाईको आवाजमा देवी सावित्री तथा हुंकारमा प्रजापतिको वास हुन्छ । यति मात्र होइन, समस्त गाईहरू साक्षात् विष्णुरूप हुन् । उनीहरूको सम्पूर्ण अङ्गमा भगवान् केशव विराजमान रहन्छन् ।

## स्कन्दपुराण

गाई सर्वदेवमयी र वेद सर्वगोमय हुन्छन् । गाईको सिंगको अग्रभागमा नित्य इन्द्र निवास गर्दछन् । हृदयमा कार्तिकेय, शिरमा ब्रह्मा र ललाटमा वृषभध्वज शंकर, दुवै नेत्रमा चन्द्रमा र सूर्य, जिब्रोमा सरस्वती, दाँतमा मरुद्गण र साध्य देवता, हुंकारमा अङ्ग-पद-क्रमसहित चारै वेद, रोमकूपमा असंख्य तपस्वी र ऋषिगण, पीठमा दण्डधारी महाकाय महिषवाहन यमराज, स्तनमा चारै पवित्र समुद्र, गोमूत्रमा विष्णुचरणबाट निस्किएको, दर्शन मात्रैले पाप नाश गर्ने श्रीगङ्गा, गोबरमा पवित्र सर्वकल्याणमयी लक्ष्मी, खुरको अग्रभागमा गन्धर्व, अप्सराहरू र नाग निवास गर्दछन् । यस अतिरिक्त सिवा सागरान्त पृथ्वीमा जति पनि पवित्र तीर्थ छन्, ती सबै गाईको शरीरमा रहन्छन् । विष्णु सर्वदेवमय हुन्, गाई यही विष्णु शरीरबाट उत्पन्न भएकी हुन्, विष्णु र गाई– यी दुवैका शरीरमा नै देवता निवास गर्दछन् । यसैले मनुष्यले गाईलाई सर्वदेवमयी मान्दछन् ।

(आवन्त्यखण्ड, रेवाखण्ड अ० ८३)

## महाभारत

**यदा च दीयते राजन् कपिला ह्यग्निहोत्रिणे । तदा च शृंगयोस्तस्या विष्णुरिन्द्रश्च तिष्ठतः ॥ चन्द्रवज्रधरौ चापि तिष्ठतः शृंगमूलयोः । शृंगमध्ये तथा ब्रह्मा ललाटे गोवृषध्वजः ॥ कर्णयोरश्विनौ देवौ चक्षुषी शशिभास्करौ । दन्तेषु मरुतो देवा जिह्वायां वाक् सरस्वती ॥ रोकमूपेषु मुनयश्चर्मण्येव प्रजापतिः । निःश्वासेषु स्थिता वेदाः सषडङ्गपदक्रमाः ॥ नासापुटे स्थिता गन्धाः पुष्पाणि सुरभीणि च । अधरे वसवः सर्वे मुखे चाग्निः प्रतिष्ठितः ॥ साध्या देवाः स्थिताः कक्षे ग्रीवायां पार्वती स्थिता । पृष्ठे च नक्षत्रगणाः ककुद्देशे नभःस्थलम् ॥ अपाने सर्वतीर्थानि गोमूत्रे जाह्नवी स्वयम् । अष्टैश्वर्यमयी लक्ष्मीर्गोमये वसते सदा ॥ नासिकायां सदा देवी ज्येष्ठा वसति भामिनी । श्रोणीतटस्थाः पितरो रमा लाङ्गूलमाश्रिता ॥ पार्श्वयोरुभयोः सर्वे विश्वेदेवाः प्रतिष्ठिताः । तिष्ठत्युरसि तासां तु प्रीतः शक्तिधरो गुहः ॥ जानुजङ्घोरुदेशेषु पञ्च तिष्ठन्ति वायवः । खुरमध्येषु गन्धर्वाः खुराग्रेषु च पन्नगाः ॥ चत्वारः सागराः पूर्णस्तस्या एव पयोधराः ।**

(आश्वमेधिकपर्व, वैष्णवधर्मपर्व, अध्याय ९२)

भगवान् श्रीकृष्णले राजा युधिष्ठिरसँग भन्नुभयो– राजन् ! जुन समयमा अग्निहोत्रि ब्राह्मणलाई कपिला गाई दानमा दिइन्छ, त्यसबेला गाईको सिंगमाथिको भागमा विष्णु र इन्द्र निवास गर्दछन् । सिंगको मूलमा चन्द्रमा र वज्रधारी इन्द्र रहन्छन् । सिंगको बीचमा ब्रह्मा तथा ललाटमा भगवान् शंकरको निवास हुन्छ, दुवै कानमा अश्विनीकुमार, नेत्रमा चन्द्रमा र सूर्य, दाँतमा मरुद्गण, जिह्वामा सरस्वती, रोमकूपहरूमा मुनि, चर्ममा प्रजापति एवं श्वासमा षडङ्ग, पद र क्रमसहित चारै वेदको निवास रहन्छ ।

नासिकाका छिद्रहरूमा गन्ध र सुगन्धित पुष्प, तलको ओंठमा सबै वसु गण तथा मुखमा अग्नि निवास गर्दछन् । कक्षमा साध्य देवता, गर्दनमा पार्वती, पीठमा नक्षत्रगण, ककुद्को स्थानमा आकाश, अपानमा सम्पूर्ण तीर्थ, मूत्रमा साक्षात् गङ्गाजी तथा गोबरमा आठ ऐश्वर्यहरूबाट सम्पन्न लक्ष्मी रहन्छिन् । नासिकामा परमसुन्दरी ज्येष्ठा देवी, नितम्बहरूमा पितृ एवं पुच्छरमा भगवती रमा रहन्छिन् । करङमा सबै विश्वेदेव स्थित छन् र छातीमा प्रसन्नचित्त शक्तिधारी कार्तिकेय रहन्छन् । घुँडा र तिघ्रामा पाँच वायु रहन्छन्, खुरको मध्यमा गन्धर्व र अग्रभागमा सर्प निवास गर्दछन् । जलबाट परिपूर्ण चारै समुद्र गाईको चारै स्तन हुन् ।

(कल्याण, गोसेवा अङ्ग, जनवरी, सन् १९९५)

# मृगस्थलीको गौशाला

काठमाडौंको पवित्र पशुपति क्षेत्रमा प्रवाहित भैरहेकी गंगास्वरुपिणी बागमतीको पूर्वतिर फैलिएको घना वन प्रदेशलाई श्लेषमान्तक वनको नामले चिनिन्छ। असंख्य शिवालयहरु, रामजानकी मन्दिर, किराँतेश्वर महादेव मन्दिर, विश्वरुपा मन्दिरका साथ ध्रुवस्थलीलगायत अनेकौ कुण्डहरु रहेको यस वन प्रदेशमा भगवान् शिवको प्रिय क्रीडास्थल प्रसिद्ध मृगस्थली पनि छ। शिव पार्वतीका अनेकौं आख्यानसँग गाँसिएको यस क्षेत्रमा शिवावतार गुरु गोरखनाथको शिखरशैलीको मन्दिर अवस्थित छ।

श्री श्री महायोगी गुरु गोरखनाथ काठमाडौं उपत्यकाको भ्रमणमा लोकबाट अपेक्षित मान्यता नपाउंदा वर्षाका अधिनायक बाह्र नागहरुमाथि आसन जमाई निरन्तर बाह्र बर्षसम्म यसै मृगस्थलीमा ध्यानमग्न हुनुभएको थियो। नागहरुको बन्धनले वर्षाबिना अनिकाल भएको अवस्थामा कामरुप कामाक्षाबाट श्री मच्छेन्द्रनाथको उपत्यका आगमनपछि गुरु सत्कारका लागि श्री गोरखनाथको ध्यान भङ्ग भएपश्चात् वर्षारम्भ भई सहकाल आएको आख्यानसँग जोडिएको स्थान सिद्धाचल

समेत भनिने मृगस्थलीमा गोरक्षपीठ रहेको छ।

श्री गोरक्षनाथको संज्ञाबाट पनि श्रद्धा गरिने गोरखनाथले गो (गाई) रक्षाको पर्याय (गो) सृष्टि वा इन्द्रिय मोहजालबाट मुक्ति वा रक्षा गरिदिनु हुने सूक्ष्मतार्थ बुझ्न सकिन्छ। यसै तथ्यको पूर्णतामा मृगस्थलीको वरपर बृहद् गौचरण (गौचरिचरण) रहेको बिर्सन सकिँदैन। तर गौपालन संस्कृति विलीन हुँदै सो चरण क्षेत्रमा त्रिभुवन विमानस्थलको सञ्जाल बनिसकेको छ।

पछिल्लो समयमा नाथमतको सम्वर्द्धनमा प्रसिद्ध योगी नरहरिनाथको कर्मभूमि यसै सिद्धाचल मृगस्थली भयो। योगी नरहरिनाथको बसोवासका लागि वि.सं. २००५ मा तत्कालीन प्रधानमन्त्री मोहन शम्शेरले मृगस्थली गोरक्षपीठ परिसरको पश्चिमी भागमा भान्सा खण्ड (नरहरिनाथको समाधिस्थ र काश्यमूर्ति स्थापित स्थल, हाल भग्नावशेष), आवास गृह तथा गौशाला बनाइदिएका थिए। योगीजीको दिनारम्भ गोपूजनाबिना हुँदैनथ्यो। प्रारम्भमा उल्लेख्य संख्यामा रहेका गाईवस्तु हाल ८-१० वटामा सीमित छन्। गौदाना व्यवस्थाअन्तर्गत सरकारीस्तरबाट वार्षिक २७-२८ हजारको पराल उपलब्ध हुने र अरु आजीवन सेवक रहेका दुईजनाको आफ्नै श्रमबाट घाँसको व्यवस्था भइरहेको छ।

**श्री गोरक्षनाथको संज्ञाबाट पनि श्रद्धा गरिने गोरखनाथले गो (गाई) रक्षाको पर्यायको अर्थ (गो) सृष्टि वा इन्द्रिय मोहजालबाट मुक्ति वा रक्षा गरिदिनु हुने सूक्ष्म अर्थ बुझ्न सकिन्छ।**

आजीवन गो सेवा गर्नु भएका ८२ वर्षीय श्री गोरखबहादुर रोकाया गौको सेवाबाटै सम्पूर्ण आध्यात्मिक प्रगति, उन्नति भएको अनुभव गर्नुहुन्छ। पूजाआजा, जप, तप, ध्यान सबै नै गौसेवामा लुकेको रहस्य पनि उहां बताउनुहुन्छ ।

आराध्यदेव पशुपतिनाथको नित्य र पर्व पूजालाई आवश्यक पुष्पादि परिपूर्तिको लागि भण्डारखाल बगैंचा रहेजस्तै देवाभिषेक लागि आवश्यक दुग्ध आपूर्ति गर्न गौशालाको व्यवस्था रहेको स्मरण गर्न सकिन्छ। गाईवस्तुको प्राकृतिक चरणको लागि रहेको सिफलको चौर खुम्चिसकेको र सानो गौचरण खेल मैदानमा परिणत भइसकेको छ। गौपालन, गौसेवा र गौपूजनको परम्परालाई निरन्तरता दिने प्रयास गर्नु पनि गोरक्षनाथ आराधना मान्न सकिन्छ।

# गोहत्या एक जघन्य अपराध

गाउँमा बिजुली नबलेपछि धार्मिक आस्थाको आधारमा विद्युतको ट्रान्सफर्मरमा बोकाको बलि दिइएको अनौठो र उदेकलाग्दो घटना सेलाउन नपाउँदै अर्को अझै दर्दनाक, शर्मनाक र शोकाकुल पार्ने घटना घटेको छ फिदिमको पाँचथरको पौवासारताप गाविसमा । उक्त गाविसमा गाई काटेर मासु बेचेको अभियोगमा प्रहरीले केही मानिसलाई पक्राउ गरेको समाचार एउटा दैनिक समाचारपत्रमा प्रकाशित गरिएको थियो । महिनौँ अघिदेखि गाई काटेर मासु बेच्दै आएका आरोपितहरूलाई गाईको मासुसहित पक्राउ गरिएको हो ।

प्रकाशमा आएको यस घटनाबाट यस्ता घटनाहरू लुकीछिपी भइरहेको हुन सक्ने सम्भावनालाई नकार्न सकिन्न । आखिर किन घट्छ गौहत्याजस्तो जघन्य अपराध ? किन घट्छ यस्तो हृदयविदारक घटना ? गोहत्या स्वतन्त्र नेपालका लागि दुर्भाग्यपूर्ण अभिशाप

हो । लुकीचोरीबाहेक अन्य प्रकृतिबाट हुने गोबधजस्तो जघन्य अपराध र महापापबाट मुक्त हुनु अति आवश्यक छ । उशीनर, विष्वगश्व, नृग, भगीरथ, मान्धाता, मुचुकुन्द, भूरिद्युम्र, नल, सोमक, पुरुरवा, भरत र श्रीरामको राज्यमा पूर्ण पोषण र संरक्षण सम्प्राप्त तथा श्रीकृष्णचन्द्रद्वारा पालितपोषित गाई आज यान्त्रिकविधाको आलम्बन लिएर प्रतिवर्ष ठूलो संख्यामा काटिँदैछन्, गाईको मासु आयात निर्यात भइरहेका छन् । यस्तो आततायी दुष्कार्यको सर्वत्र आलोचना र तिरस्कार हुनुपर्छ । आर्यभूमि, सनातनभूमि, अवतारभूमिमा गाईको हत्या र उपेक्षा महान् आश्चर्य र अपराध हो । विकृत मानसिकताको उपज यस्तो घटनाले सबैको हृदय छियाछिया भएको छ ।

गाईलाई आमा भनी सम्बोधन गरिएको छ । गाई हाम्री पूजनीय र प्रात:स्मरणीय हुन् । पूजनीय गौमातालाई आर्थिक दृष्टिले हेर्नु अथवा बूढी, लंगडी, लुली, अपाहिज तथा अनुपयोगी ठानेर काट्ने कुरा गर्नु र काट्ने कुरामा सल्लाह दिनु, काट्ने कुरामा कुनै पनि प्रकारले समर्थन गर्नु घोर एवं अक्षम्य अपराध हो, पाप हो । गाई कुनै साधारण पशु होइन । यिनको त साक्षात् वेदले पनि स्तुति गरिरहेको छ । गाई साक्षात् श्रीनारायण हुन् । त्यसैले वेदले गाई मार्नेलाई सीसाको गोलीले मारिदिनुपर्ने आदेश गरेको छ, गाईको महिमा बताउँदै उसलाई अहिंस्य बताइएको छ–

**माता रुद्राणां दुहिता वसूनां**
**स्वसादित्यानाममृतस्य नाभिः ।**
**प्रनु वोचं चिकितुषे जनाय**
**मा गामनागामदितिं वधिष्ट ॥**

अर्थात् गाई रुद्रहरूकी माता, वसुहरूकी पुत्री, अदितिपुत्रहरूकी बहिनी र घृतरूप अमृतकी खजाना हुन् । अत: प्रत्येक विचारशील पुरुषलाई मैले यही सम्झाएको छु–

*गाईलाई आमा भनी सम्बोधन गरिएको छ । गाई हाम्रा पूजनीय र प्रातःस्मरणीय हुन् । पूजनीय गौमातालाई आर्थिक दृष्टिले हेर्नु अथवा बूढी, लंगडी, लुली, अपाहिज तथा अनुपयोगी ठानेर काट्ने कुरा गर्नु र काट्ने कुरामा सल्लाह दिनु, काट्ने कुरामा कुनै पनि प्रकारले समर्थन गर्नु घोर एवं अक्षम्य अपराध हो, पाप हो । गाई कुनै साधारण पशु होइन । यिनको त साक्षात् वेदले पनि स्तुति गरिरहेको छ । गाई साक्षात् श्रीनारायण हुन् । त्यसैले वेदले गाई मार्नेलाई सीसाको गोलीले मारिदिनुपर्ने आदेश गरेको छ ।*

निरपराध एवं अवध्य गाईको वध नगर ।

## राष्ट्रियताको पहिचान

गाईले नेपालको राष्ट्रियताको पहिचान गरिरहेको छ किनकि नेपालको राष्ट्रिय जनावर गाई हो । गाईको विशेष महत्त्व रहेको हुनाले नै गाईलाई नेपालको राष्ट्रिय जनावर मानिएको हो । यति मात्रै होइन नेपालमा मनाइने विभिन्न चाडपर्वहरू, रीतिरिवाज, चालचलन, गर्भाधान, जन्म, नामकरण, विवाह आदि संस्कारहरूमा गाईबाट उत्पादित वस्तुहरूको प्रयोग सर्वग्राह्य हुन्छन् । 'हरियो गोबरले लिपेको, लक्ष्मी पूजा गरेको, हे औँसी बार गाई तिहार भैलो' भनेर देउसी माग्ने प्रत्येक नेपालीलाई थाहा छ तिहारमा एकदिन गाईको पूजा पनि गरिन्छ भनेर । तिहारको तेस्रो दिन गरिने गाईको पूजामा धेरै गूढ कुराहरू लुकेका छन् । गाईको गोबरमा लक्ष्मीको र गोमूत्रमा गङ्गाको निवास मानिन्छ । त्यसैले गाईको गोबर-गोमूत्र अति पवित्र हुन्छन् । गोबरले लिपेको घरमा प्लेग, हैजा आदि भयङ्कर रोग हुँदैन । यस अतिरिक्त युद्धको समयमा गोबरले लिपेका घरहरूमा बमको त्यति असर हुँदैन जति सिमेन्ट आदिबाट बनेका घरहरूमा हुन्छ । गोबरमा विष खिँच्ने विशेष शक्ति हुन्छ ।

सानो बाच्छीको गोमूत्र प्रतिदिन एक-दुई तोला पिउने हो भने पेटका रोगहरूको शमन हुन्छ । यकृत् पीडामा पनि गोमूत्रको सेवन अति लाभदायक हुन्छ । गोमूत्रले स्नान गर्नाले शरीर चिलाउने रोग निको हुन्छ । संखिया, भिलावा आदि ठूलठूला विषहरूको शुद्धि पनि गोमूत्रबाट हुन्छ । सुन, चाँदी पनि गोमूत्रमा शुद्ध गरिन्छन् ।

जब मानिस बिरामी हुन्छ तब उसलाई गाईको दूध खान दिइन्छ किनकि गाईको दूधले तत्काल बल, शक्ति दिन्छ । यदि बिरामीले अन्न पचाउन सक्दैन भने उसको नजिकै

गाईको घिउ र खाद्य पदार्थहरू अग्निमा आहुति दिएर त्यसबाट निस्केको धूवाँबाट बिरामीलाई खुराक पुऱ्याउन सकिन्छ । मानिस मर्न लाग्दा उसको मुखमा गङ्गाजल वा गाईको दही हालिदिन्छन् । यसको कारण यो हो कि यात्राका लागि प्रस्थान गर्दा गाईको दही लिनु माङ्गलिक हुन्छ । जसको मृत्यु हुँदैछ, उसलाई गाईको दही अवश्य दिनुपर्दछ जसबाट परलोकमा उसको मङ्गल हुन्छ । अन्तकालमा मनुष्यलाई जसरी गङ्गाजल दिइन्छ, त्यसरी नै गाईको दही दिइन्छ ।

वैतरणीबाट बचनका लागि गोदान गरिन्छ । श्राद्धकर्ममा गाईको दूधको खिर बनाइन्छ किनकि पवित्र हुनाले यस खिरबाट पितृहरूलाई ठूलो तृप्ति मिल्छ । मनुष्य, देवता, पितृ आदि सबैलाई गाईको दूध, घिउ आदिबाट अति तृप्ति प्राप्त हुन्छ ।

गाईको छायाँ पनि अति शुभ मानिन्छ । यात्राको समयमा गाई वा साँढे दाहिनेनिर आउँछन् भने शुभ मानिन्छ र गाईको दर्शनले यात्रा सफल हुन्छ । गाईको स्पर्श गर्दै बहने हावा पनि पवित्र हुन्छ । जहाँ गाई बस्छन् त्यहाँको भूमि पनि पवित्र मानिन्छ । गाईको चरणको धूलो पनि पवित्र हुन्छ ।

खाद्य एवं पोषणको दृष्टिले दूध, दही, घिउ तथा अन्न उत्पादनका लागि मलखाद गाईमाथि नै निर्भर रहेको छ । प्राचीनकालमा मानिसको सम्पन्नताको आधार ऊसँग भएको

**गाईले नेपालको राष्ट्रियताको पहिचान गरिरहेको छ किनकि नेपालको राष्ट्रिय जनावर गाई हो । गाईको विशेष महत्त्व रहेको हुनाले नै गाईलाई नेपालको राष्ट्रिय जनावर मानिएको हो । यति मात्रै होइन नेपालमा मनाइने विभिन्न चाडपर्वहरू, रीतिरिवाज, चालचलन, गर्भाधान, जन्म, नामकरण, विवाह आदि संस्कारहरूमा गाईबाट उत्पादित वस्तुहरूको प्रयोग सर्वग्राह्‍य हुन्छन् । हरियो गोबरले लिपेको, लक्ष्मी पूजा गरेको, हे औँसी बार गाई तिहार भैलो' भनेर देउसी माग्ने प्रत्येक नेपालीलाई थाहा छ तिहारमा एकदिन गाईको पूजा पनि गरिन्छ भनेर । तिहारको तेस्रो दिन गरिने गाईको पूजामा धेरै गूढ कुराहरू लुकेका छन् । गाईको गोबरमा लक्ष्मीको र गोमूत्रमा गङ्गाजीको निवास मानिन्छ । त्यसैले गाईको गोबर-गोमूत्र अति पवित्र हुन्छन् ।**

पशुधनसँग गरिन्थ्यो । गाईलाई पवित्र सम्झेर उसको पूजा गर्ने प्रचलन भयो । सबै सामाजिक एवं धार्मिक कार्यहरूमा गाई एवं त्यसको उत्पादनको प्रयोग एउटा परिपाटीको रूपमा ग्रहण गर्ने प्रावधान बस्यो । पहिलेपहिले खेतीकार्यको पूरा भार गोसम्पदामाथि निर्भर हुन्थ्यो । अत: गाईको पालनपोषण नै आर्थिक सम्पन्नताको द्योतक हुन गयो । गर्गसंहिता (गोलोकखण्ड) मा कसैसँग भएको गाईको संख्याको आधारमा उसलाई निम्न प्रकारका पदवीहरूले सम्मान गर्ने गरिएको पाइन्छ–

१० लाख गाई पाल्नेलाई वृषभानु, ९ लाख गाई पालकलाई नन्द र ५ लाख गाई पाल्नेलाई उपनन्द पदवी दिइन्थ्यो । यसप्रकार हाम्रो सांस्कृतिक एवं धार्मिक क्षेत्रमा गाई मनुष्य जीवनको अभिन्न अङ्ग थियो । सबै प्राचीन ग्रन्थ, वेदादि शास्त्र, महाभारत, भविष्यपुराण, पद्मपुराण आदिमा गाईको सम्मान एवं पूजाको उल्लेख पाइन्छ । गाईको शरीरका विभिन्न अंगहरूमा विभिन्न देवीदेवताहरूको वासलाई परिलक्षित गरिएको छ–

**'सर्वे देवाः स्थिता देहे सर्वदेवमयी हि गौः॥'** (बृहत्पराशरस्मृति)

गाईको सेवाबाटै पनि अन्त:करण निर्मल हुन्छ । एउटा गाईको पूजन गर्दा समस्त देवताको पूजन हुन जान्छ जसबाट सबै देवताहरूलाई पुष्टि मिल्दछ । यी विविध कारणहरूले गर्दा नेपालको राष्ट्रिय जनावर गाई रहनुको ठूलो सान्दर्भिकता देखिन्छ । यसले नेपालको राष्ट्रियताको चिनारी दिइरहेको छ ।

### गोरक्षाबाट फाइदै फाइदा

गाईको रक्षाबाट मनुष्य देवता, भूत-प्रेत, यक्ष-राक्सस, पशुपक्षी, वृक्ष-घाँस आदि सबैको रक्षा हुन्छ । पृथ्वीमा यस्तो कुनै पनि स्थावर-जंगम प्राणी छैन जसले गाईबाट पुष्टि नपाएको होस् । गाई अर्थ, धर्म, काम र

मोक्षलाई सिद्ध गर्ने, लोक-परलोकमा सहायता गर्ने र नरकबाट उद्धार गर्ने हुन् । भगवान्‌को सेवा गर्नाले त्रिलोकीको सेवा भए जस्तै निष्काम भावले गाईको सेवा गर्नाले विश्व मात्रको सेवा हुन जान्छ किनकि गाई विश्वकी माता हुन् । गाईको सेवाबाट लौकिक एवं पारलौकिक दुवै प्रकारका लाभ पाइन्छन् । गाईको सेवाबाट धर्म, अर्थ, काम मोक्ष चारै पुरुषार्थ सिद्ध हुन्छन् । रघुवंश पनि गौ सेवाबाटै चलेको थियो ।

गोरक्षाका लागि बलिदान गर्नेहरूको कथाहरूबाट इतिहास, पुराण भरिएका छन् । अति दु:खका साथ भन्नुपर्छ कि आज हाम्रो देशमा पैसाको लोभमा गाईको वध हुँदैछ । यदि यसैगरी गौहत्या हुँदै गएमा दु:खका साथ भन्नुपर्नेछ कि यसको भयावह परिणाम सबैले भोग्नुपर्नेछ ।

गोरक्षाबाट सबै प्रकारका लाभ हुन्छन्– यस कुरालाई धर्मप्राण नेपालले बुझ्न सक्छ । जो विदेशी संस्कृति, सभ्यताबाट प्रभावित छन् तथा केवल भौतिक चकाचौँधमा फँसेका छन् उनीहरू पनि गाईको महत्त्व बुझ्न सक्दैनन् । उनीहरू ऋषिमुनिहरूका कुरालाई त मान्दैनन् र स्वयं पनि यस्ता कुरालाई जान्दैनन् । ऋषिमुनिहरूले, राजा-महाराजाहरूले, धर्मात्माहरूले गोरक्षाका लागि ठूलठूला कष्ट उठाउनुको कारण यही हो कि उनीहरू सबैले गाईको धेरै ठूलो महत्ता र गरिमा बुझेका थिए ।

**गोरक्षाका काइदाहरु**

गाईको रक्षाका लागि गाईलाई आफ्नो घरमा राख्नु आवश्यक हुन्छ । गाईको नै दूध, घिउको सेवन गर्नुपर्छ । गाईको रक्षाका लागि गौशालाहरू बनाउनुपर्छ, दूधको उद्देश्यले होइन । सबै गोचरभूमिहरूको रक्षा गर्नुपर्छ । सरकारबाट पनि अन्य गोचरभूमिहरू प्राप्त गर्नुपर्छ । गोहत्या नीतिको पूर्णरूपेण विरोध गर्नुपर्छ ।

कृषकहरूले गाई, बाच्छी, साँढे आदिलाई नबेचून् । गाई र माई बेच्ने वस्तु होइनन् भन्ने बुझ्नुपर्छ । जबसम्म गाईले दूध र बाच्छाबाच्छी दिन्छन्, जबसम्म साँढेले काम गर्न सक्छन् तबसम्म उनीहरूलाई पालिन्छ । जब उनीहरू बूढा हुन्छन् तब बेचिन्छन्– यस्ता कृतघ्न र पाप कार्यलाई त्याग्नुपर्छ । बौद्धकालमा पनि गाईहरूको प्रबन्ध राम्रो थियो । बूढी, अपाहिज गाईहरूलाई विशेष स्थानमा राख्ने प्रथा थियो । कौटिल्यको अर्थशास्त्रमा गाईहरूको आहार एवं पोषणको वर्णन गरिएको छ । कृषि-पाराशरशास्त्रमा गाईलाई आहार एवं ऊर्जाको मुख्य स्रोत बताइएको पाइन्छ । जैन मतावलम्बीहरूका अनुसार भगवान् ऋषभदेवले गोवंश, पशुहरूको पालनपोषण एवं उनीहरूको उपयोगिताको बारेमा शिक्षा दिने अनुशंसा गरेका थिए ।

गाई पाल्नेहरूको यो कर्तव्य हुन आउँछ कि उनीहरू व्यावहारिकरूपले गोवंशको उपयोगितालाई बुझून्, केवल दूध लिनका लागि मात्र गाईसित सम्बन्ध नराखून् । गाईको सुरक्षा, संरक्षण तथा संवर्द्धनको प्रयत्न पनि गरुन् । आफ्नो पूरा शक्ति लगाएर हर हालतमा गाईको रक्षा गर्नु, उनीहरूलाई वधशालामा पुग्नबाट रोक्नु तथा उनीहरूको पालन गर्नु हाम्रो परम कर्तव्य हो । प्राचीन गौरवशाली गोसंस्कृतिलाई पुन: प्रतिष्ठित गर्नु आवश्यक भइसकेको छ ।

जय गुरुदेव !

# गोमूत्रको गजबको प्रभाव

गाई भनेका हिँडडुल गर्ने चिकित्सालय हुन्। गाईसित औषधिहरूको भण्डार छ। गोमूत्र चिकित्सा पद्धतिबाट प्रभावकारी रुपमा अनेकौँ साध्य एवं असाध्य रोगहरूको औषधि गर्न सकिन्छ । हाम्रा पावन ग्रन्थ एवं अथर्ववेद, चरकसंहिता, राजनिघंटु, वृद्धवाग्भट्ट, अमृतसागर, भावप्रकाश, सुश्रुतसंहितामा यसका सुन्दर वर्णन पाइन्छन् ।

गोमूत्र चिकित्सामाथि गरिएको अनुसन्धानबाट यो पत्ता लागेको छ कि यसबाट मधुमेह, ब्लडप्रेसर, दम, सोराइसिस, एक्जिमा, हृदयरोग, रक्तनलीमा ब्लकेज, फिट्स, क्यान्सर, एड्स, पाइल्स, प्रोस्टेट, बाथ, माइग्रेन, थाइराइडसम्बन्धी रोग, अल्सर, एसिडिटी, कब्जियत, स्त्री रोग, नाक एवं कानका रोग, गर्भपातसहित अधिकांश रोगहरूलाई भगाउन सकिन्छ ।

गोमूत्रको विश्लेषणमा पाइएको छ कि यसमा नाइट्रोजन, सल्फर, फस्फेट, सोडियम, पोटासियम, म्यान्गनीज, कोर्बोलिक एसिड, आइरन, सिलीकन, क्लोरीन, म्याग्नेसियम, म्यालिक, साइट्रिक, ट्राट्रिक, सक्सेनिक, ह्यूपेरिक एसिड, क्याल्सियम, ल्याक्टोज, एन्जाइम्स, क्रिएटिनिन, हार्मोन एवं स्वर्णक्षार हुन्छन् । मनुष्यको शरीरमा पाइने तत्त्वहरूको कमबेसीले गर्दा अधिकांश रोगको उत्पत्ति हुन्छ । अत: गोमूत्रको सेवनबबाट शरीरमा जुन तत्त्वको कमी वा अधिकता भएको छ, त्यो ठीक भएर असाध्य रोग पनि ठीक हुन्छ ।

हाम्रो धर्म-संस्कृतिमा गौमातालाई सर्वोच्च स्थान दिइएको छ । तेत्तीस करोड देवताहरूको देवमन्दिर हो गाई । देवता भनेको दिने शक्ति हो । समाजसित कमभन्दा कम लिएर धेरै दिने देवता नै हुन्। गौमाताले हामीसँग अत्यल्प लिन्छिन् र अधिक दिन्छिन् । हाम्रो धर्म-संस्कृतिमा, अर्थव्यवस्था र जीवनपद्धतिमा गौमाताको स्थान सर्वोपरि छ भन्ने कुरा ऋषिमुनिहरूले कठीन त्याग, तपस्या र साधनाबाट सिद्ध गरेका छन्। सम्पूर्ण विश्वमा गाईलाई आमा भनेर सम्बोधन गरिएको छ । जन्म दिने आमाले त १-२ वर्ष मात्रै आफ्नो शिशुलाई दूध पिलाउँछिन्, तर गौमाताले त जीवनपर्यन्त मानिसलाई आफ्नो अमृततुल्य दूध पिलाउँछिन् ।

शिव मन्दिरमा यदि कालो गाई बाँधिएको छ भने शिवको दर्शनसँगसँगै कालो गाईको दर्शनबाट कालसर्पयोगको निवारण हुन्छ । गाईको पछाडिको

खुट्टाका खुरहरूको दर्शन मात्रैले पनि कहिल्यै अकाल मृत्यु हुँदैन । गाईको प्रदक्षिणा गर्नाले चारै धामको दर्शनको लाभ प्राप्त हुन्छ किनकि गाईको चारै खुट्टामा चारै धाम विद्यमान छन् । जसरी पीपल र तुलसीको वृक्षले अक्सिजन छोड्छ, त्यसैगरी गाई मात्रै यस्तो प्राणी हुन्, जसले अधिकतम अक्सिजन छोड्छन् । एक सानो चम्चा गाईको घिउ सुकेको गुइँठामा हालेर बाल्ने हो भने यसबाट एक टन अक्सिजन बन्छ भनिएको छ । त्यसैले यज्ञ, हवनहरूमा गाईको घिउ नै उपयोगमा ल्याइन्छ । प्रदूषणलाई हटाउन यो भन्दा राम्रो कुनै अरू साधन छैन ।

गाईको दूध, मखन, घिउ र पनीर अमृततुल्य हुन्छन् । गाईको गोबर मल होइन, मलशोधक हो । यसले मल बनेर उत्तम अनाज, फलफूल, सागसब्जी आदि दिन्छ । गोमूत्र एउटा दिव्यौषधि एवं फसलका लागि रक्षक हो । गाईको घिउलाई सुकेको गुइँठामा हालेर धूवाँ निकाल्ने हो भने यसले विषालु ग्याँसलाई पनि प्रभावहीन गर्छ । गोमूत्रमा तामा पाइन्छ जुन मानव शरीरभित्र स्वर्णरूपमा परिवर्तित हुन्छ । यो विषनाशक हुन्छ । गाईको दूध पिउनाले बल र बुद्धिको वृद्धि हुन्छ तथा मनुष्यको मनमा सात्त्विक भावको वृद्धि हुन्छ ।

गौमाताको दुवै सिंग शक्तिशाली पिरामिड हुन् । नक्षत्रहरू तथा सूर्यबाट ग्रहण गरिएका शक्ति गोबर, दूध, घिउ आदिको माध्यमबाट हामीलाई प्राप्त हुन्छ । जहाँ गाई बाँधिएको हुन्छ, त्यहाँ वास्तुदोष हुँदैन । कुनै पनि ग्रहको बाधा छ भने गौसेवा वा गाईलाई रोटी, गुड आदि खुवाउँदा ग्रहहरूको पनि शान्ति हुन्छ ।

**एड्स, दम, साराइसिस, एक्जिमा, ब्लडप्रेसर, हृदयरोग, प्रोस्टेट, पाइल्स सहित अनेकौं रोगीहरू लाभान्वित भइरहेका छन् गोमूत्रको सेवनले ।**

दुई महिना मात्रै जीवित रहन्छ भनेर डाक्टरले भनेका क्यान्सरका बिरामीहरू पनि गोमूत्र चिकित्सा पद्धतिबाट स्वस्थ भएका उदाहरण छन् । ४८८ एवं ४२० सुगरको मात्रा भएका मधुमेहका बिरामीहरू पनि गोमूत्र चिकित्साबाट बिस्तारै ठीक भए, उनीहरूलाई इन्सुलिन दिइने काम बन्द भयो । एड्स, दम, साराइसिस, एक्जिमा, ब्लडप्रेसर, हृदयरोग, प्रोस्टेट, पाइल्ससहित अनेकौं रोगीहरू लाभान्वित भइरहेका छन् गोमूत्रको सेवनले । शल्यक्रियाको सल्लाह दिइएका कतिपय बिरामीलाई गोमूत्र चिकित्सा पद्धतिबाट उपचार गरेपछि शल्यक्रिया गर्नै नपर्ने भएको छ । ओमप्रकाश पाल नामक व्यक्तिलाई हृदयाघात भएको थियो । उनको कोलेस्ट्रोल बढेको थियो, छातीमा पीडा हुन्थ्यो । गोमूत्र सेवनपश्चात् चार किलोमिटर हिँड्न सक्छन् उनी । उनको कोलेस्ट्रोल सामान्य भयो । आहार नलीमा क्यान्सर भएका चांदमल गुर्जर झोल पनि पिउन सक्दैन थिए । यस पद्धतिबाट लाभान्वित भएर अहिले नियमित खाना खान सक्ने र खेतीबारी गर्न सक्ने भएका छन् उनी । यसबेला एड्सबाट ग्रसित कैयौं मानिसहरू गोमूत्र चिकित्साबाट लाभान्वित भइरहेका छन् । माइग्रेन र टाउको दु:खाइले जो व्यक्ति दस-पन्द्र वर्षदेखि पीडित थिए, गोमूत्र चिकित्साबाट ६ महिनामा नै लाभान्वित भए । तनावमुक्ति र स्मरण शक्ति बढाउनका लागि गोमूत्र चिकित्सा प्रभावशाली छ । गोमूत्रले पेट सफा राख्छ, कब्जियत हुन दिँदैन ।

श्रीमती सुषमा खुराणालाई थाइराइडको समस्या थियो । गोमूत्र चिकित्सा लिनुपूर्वको जाँच रिपोर्टमा टी थ्री ४.०, टी फोर १५.०, टीएसएच १.३५ देखिएको थियो, उनले थाइराइडबाट मुक्ति पाइन् । यति मात्र होइन, कुनै पनि प्रकारको एक्जिमा, दाद, चिलाउने रोगको चिकित्सा गर्न धेरै सजिलो भएको छ । वर्षौं पुरानो एक्जिमा रोगी पनि गोमूत्र चिकित्सा पद्धतिबाट लाभान्वित भइरहेका छन् । यति मात्रै होइन, स्कूल-कलेजका विद्यार्थीहरूले पनि डण्डीफोर, अनुहारमा देखिने चायाँपोतोका लागि गोमूत्र चिकित्सा पद्धति अपनाएर आफ्नो अनुहारलाई सुन्दर, दाग धब्बारहित बनाइरहेका छन् ।

*(स्रोत: योग सन्देश, हिन्दी, वर्ष ३, अंक ७, मार्च २००६)*

# पृथ्वीको अमृत गाईको दूध

**आमाको दूधपछि बच्चाका लागि उत्तम तथा श्रेष्ठ आहार केवल गाईको दूध मात्रै हो। गाईको दूध आमाको दूध जत्तिकै सुपाच्य हुन्छ तथा त्यसमा आमाको ममता, वात्सल्य, प्रेम तथा करूणा पनि समाहित भएको हुन्छ। जसरी आमाको दूधको मूल्य चुकाउन सकिन्न, त्यसरी नै गाईको दूध पनि बहुमूल्य छ।**

पूर्वकालमा हाम्रा पूर्वज दीर्घायु र स्वस्थ जीवन जिउँथे। उनीहरुको जीवन कृत्रिमताले प्रभावित नभई प्राकृतिक थियो। उनीहरुको स्वस्थ शरीर, प्रसन्न मन र तीक्ष्ण बुद्धिका अनेक रहस्यहरुमध्ये एउटा रहस्य हो– गाईको दूधको सेवन।

–महाभारतमा यक्षले महाराज युधिष्ठिर सित सोधे– पृथ्वीको अमृत के हो ? युधिष्ठिरले उत्तर दिए– गाईको दूध पृथ्वीको अमृत हो।

–आमाको दूधपछि बालकहरुका लागि उत्तम तथा श्रेष्ठ आहार केवल गाईको दूध मात्रै हो। गाईको दूध आमाको दूध जत्तिकै सुपाच्य हुन्छ तथा त्यसमा आमाको ममता, वात्सल्य, प्रेम तथा करुणा पनि समाहित भएको हुन्छ। जसरी आमाको दूधको मूल्य चुकाउन सकिन्न, त्यसरी नै गाईको दूध पनि बहुमूल्य छ।

–डाक्टर न्युटमन भन्दछन् कि यदि देशका बालकहरुको सुख र कल्याण चाहने हो भने उनीहरुलाई बुद्धिजीवी र बलवान् बनाउने हो भने उनीहरुलाई भोजनमा दिनहुँ गाईको दूध दिनुपर्छ।

–जन्मैदेखि गाईको दूध पिउने बालक तीव्र बुद्धिजीवी तथा मेधावी हुन्छन्। यस्ता बालक वैज्ञानिक, डाक्टर तथा इन्जिनियर बन्छन्, यसका अनेकौं उदाहरण पाइन्छन्।

–गाईको दूध अत्यन्तै स्वादिष्ट, स्निग्ध, कोमल, मधुर, बुद्धिवर्द्धक, बलवर्द्धक, रगत बढाउने, तत्काल वीर्यवर्द्धक रसायन हो। यो ओजसंवर्द्धक तथा आयुष्यवर्द्धक हुन्छ।

–गाईको दूध अमृतसमान संजीवनी हो। गाईको दूधमा अनेक वनस्पतिहरुको औषधीय गुण तथा सूर्यको प्रकाशमा निहित दिव्य गुण एवं त्यसको ऊर्जा समाहित भएको हुन्छ।

–गाईको दूध शीतल हुनाले ऋतुको कारण उत्पन्न गर्मीमा आराम दिन्छ तथा शरीरको तापमानलाई बनाइराख्छ।

–गाईको दूध अग्निउद्दीपक हुन्छ। खाएको अन्नलाई पचाउँछ। यो रुचि बढाउने तथा सुपाच्य हुन्छ।

–शारीरिक वा बौद्धिक श्रम गरेपछि गाईको दूध पिउनाले थकाई हट्छ। स्फूर्ति र ताजापनाको अनुभव हुन्छ। यसले शरीरलाई शीतलता प्रदान गर्छ र मानिसलाई उत्साही बनाउँछ।

–गाईको दूधको नियमित सेवले लामो समयसम्म यौवन कायम रहन्छ। यसप्रकार मानिसले वृद्धावस्थालाई लामो समयसम्म टाढा राख्न सक्छन्।

–वृद्धावस्थामा आन्द्रा कमजोर भएको अवस्थामा पनि गाईको दूध सजिलैसँग पच्छ। गाईको दूधले वृद्धावस्थामा पनि स्फूर्ति, चुस्ती र तन्दुरुस्ती बनाइराख्छ एवं वार्धक्यको असरलाई कम गर्छ। वृद्धहरुले अरु पदार्थको सेवन कम गरेर गाईको दूधको सेवनलाई बढाउनुपर्छ। यसबाट वृद्धावस्थाको कमजोरी दूर हुन्छ।

–लामो समयको बिरामीबाट उठेकाहरुले शुरुमा केवल गाईको दूध मात्र सेवन गर्नुपर्छ। मन्दाग्निको शिकार रोगीलाई एक मात्र गाईको दूधले बचाउन सक्छ। गाईको

## महाभारतमा यक्षाले महाराज युधिष्ठिरसित सोधे- पृथ्वीको अमृत के हो ? युधिष्ठिरले उत्तर दिए- गाईको दूध पृथ्वीको अमृत हो।

दूधले बिस्तारै रोगीको पाचनशक्तिलाई बढाएर उसलाई नयाँ जीवन दिन्छ ।

–गाईको दूध विषनाशक हुन्छ। यो केमिकल फर्टिलाइजर र पेस्टीसाईडका कारण तथा एलोप्याथी औषधिबाट उत्पन्न विष तथा गर्मी एवं साइड इफेक्टलाई नाश गर्छ ।

–गाईको दूध सारक अर्थात् रेचक हुन्छ । यसबाट कब्जियत भाग्छ, आन्द्रालाई सफा गर्छ ।

–एसिडिटीमा गाईको दूध सर्वोत्तम आहार तथा औषधि हुन्छ । यसमा उमालेर सेलाएपछि यसलाई पिउनुपर्छ ।

–गाईको दूधमा तेज तत्त्व धेरै हुन्छ । यो हृदय रोगीहरुका लागि आशीर्वादसमान छ । यसबाट बोसो तथा ब्लड कोलेस्ट्रोल बन्दैन । यसले धमनीहरुलाई स्थितिस्थापक बनाइराख्छ। मेदस्वी मनुष्यहरुका लागि गाईको दूध खुबै लाभदायी हुन्छ। यसले हृदयरोगबाट बचाउँछ । यसमा रगतलाई पातलो राख्ने गुण पनि पाइन्छ ।

–गाईको दूध तृप्ति, पुष्टि, स्मृति, दृष्टि, वर्ण, स्वर, सात्त्विकता, सौम्यता, मृदुता र प्रज्ञालाई बढाउने तथा वजन सन्तुलित राख्ने हुन्छ ।

–गाईको ताजा दूध जीर्ण ज्वर, क्षय, तृषा, दाह, थाक, मनोव्यथा एवं दुर्बलतामा धेरै महत्त्वपूर्ण हुन्छ ।

–क्षयरोगका बिरामीका लागि गाईको दूध परम हितकारी छ । यो

**जन्मैदेखि गाईको दूध पिउने बालक तीव्र बुद्धिजीवी तथा मेधावी हुन्छन्। यस्ता बालक वैज्ञानिक, डाक्टर तथा इन्जिनियर बन्छन्, यसका अनेकौं उदाहरण पाइन्छन्।**

यस्ता व्यक्तिहरुका लागि आहार तथा औषधि दुवै हो। यसले क्षयरोगको नाश गरी नयाँ शक्ति दिन्छ । फोक्सोका रोगहरुलाई हटाएर श्वसन तन्त्रलाई नियमित बनाउँछ । गाईको दूधका साथ आयुर्वेदिक औषधिहरुको सेवन गर्नुपर्छ ।

-गम्भीर बिरामीले आयुर्वेदिक औषधिका साथ गाईको दूध र घिउ लिनुपर्दछ । यसबाट रोग चाँडै निको हुन्छ एवं स्फूर्ति चुस्ती तथा तन्दुरुस्तीले युक्त नवजीवन प्राप्त हुन्छ ।

–आध्यात्मिक साधना गर्नेहरुका लागि, शारीरिक श्रम गर्नका लागि, आबाल, बृद्ध, स्त्रीहरुका लागि, रोगी र निरोगी सबैका लागि गाईको दूध पृथ्वीको सर्वोत्तम आहार हो । ◆

*(लोक कल्याण सेतु, वर्ष ६ अंक ६९)*

# युगपुरुष
# सद्गुरुदेव डा. न

युगपुरुष, महापुरुषहरुको जन्मदिन र शरीर त्याग गरेको दिन पनि आफैमा रहस्यमय हुन्छ, अद्वितीय हुन्छ, अर्थपूर्ण हुन्छ, युगको एउटा महान् घटना बनेर रहन्छ।

युगपुरुष सद्गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यू (परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज) को अवतरण दिनसँगै लाखौंलाख व्यक्तिहरूले सद्गुरुदेव प्राप्त गरे। युगपुरुषको पृथ्वीतटमा आगमन, उहाँले देखाउनुभएका लीला, गर्नुभएका कार्य र त्यस कालखण्ड नै पृथ्वीतटका देवीदेवतालगायत दिव्य शक्तिहरूका लागि स्वाभाविकरूपमा गर्वको समय रह्यो। एक अद्वितीय व्यक्तित्वको सान्निध्यता आफैमा कति अतुलनीय हुन्छ, कति अवर्णनीय हुन्छ भन्ने कुरा हाम्रो सोचाइ, विचार एवं कल्पनाभन्दा धेरै-धेरै परको विषय हो। जीवन धेरैले लिन्छन्, जिउँछन् र मर्छन् पनि। जीवित हुनुको पनि कुनै अर्थ छैन, कुनै आनन्द, मस्ती छैन, कुनै गर्व छैन जबसम्म जीवनको वास्तविक अर्थ बुझ्ने क्षमता हुँदैन, जीवनमा पुरुषार्थ गर्ने कला हुँदैन। सामान्यरूपमा जन्मनु अनि मर्नुलाई हामी जीवन भनेर व्याख्या गर्ने गर्छौं, ठूला-ठूला परिभाषा दिने गर्दछौं र यस्तो जीवनमा हामी गर्व गरिरहेका हुन्छौं। सामान्य जन्मनु र मर्नुलाई जीवन भनेर जीवनको परिभाषा ठानिरहेका व्यक्तिहरुले परमपूज्य सद्गुरुदेवको अवतरणसँगै जीवनको परिभाषालाई बुझ्ने मौका पाए, जीवनको लक्ष्य, उद्देश्यलाई आत्मसात् गर्ने सौभाग्य पाए, जीवनको उच्चता एवं महानताको बारेमा बुझ्ने सौभाग्य

# नारायणदत्त श्रीमालीज्यूको

# महाप्रयाण

पाए, जीवनका वास्तविक परिभाषाहरू जान्ने मौका पाए। परमपूज्य सद्गुरुदेवको अवतरणकाल आफैमा गरिमामय रह्यो, अद्वितीय क्षणहरू समेटिएको आफैमा दुर्लभतम समय रह्यो, इतिहासमा एक गौरवमय अद्वितीय युगपुरुषको आगमनको काल रह्यो। उहाँको अवतरणबाट सबैका लागि गुरु तत्वसँग जोडिने स्वर्णिम अवसर प्राप्त भयो।

परमपूज्य सद्गुरुदेवले आफ्ना जीवनकालमा प्राचीन विद्याका सम्पूर्ण क्षेत्रका गूढ रहस्यहरूलाई उजागर गरिदिनुभयो। तंत्र, मंत्र, ज्योतिष, आयुर्वेद, सम्मोहन, सामुद्रिक शास्त्र, सूर्य विज्ञान, ध्यान, योग, रत्न विज्ञानलगायतका सम्पूर्ण विधामा खोज, अनुसन्धान गरी आध्यात्मिक ग्रन्थहरू, वेद, उपनिषद्, पुराणलगायतका शास्त्रहरूका वास्तविकताहरू उजागर गर्दै तिनलाई सर्वसुलभ बनाइदिनुभयो। आफ्नो अवतरणका थुप्रै वर्ष संन्यास जीवनमा बिताउनुभएका पूज्यपाद सद्गुरुदेवले विभिन्न दुर्गम स्थानहरूको, हिमाल, पहाड, गुफा, कन्दराहरूको पैदल भ्रमण गरी संन्यास जीवनको क्लिष्टता एवं यसमा भएका अनावश्यक किसिमका भ्रमका जालोहरूलाई हटाइदिनुभयो। संन्यासीहरूबीचको अनावश्यक होडबाजी, संन्यास जीवनको दुरूपयोग गर्नेहरूलाई नयाँ पाठ सिकाई सम्पूर्णलाई गोलबन्द गरी संन्यास जीवनको मर्यादा, उच्चतालाई स्थापित गरिदिनुभयो।

उहाँले आफ्नो जीवनकालमा देश-विदेशमा हजारौं शिविरहरू आयोजना गरी लाखौं व्यक्तिहरूलाई

**सामान्य व्यक्तिहरू जन्मनु र मर्नुको कुनै अर्थ छैन, कुनै गणना छैन। तर त्यस्ता व्यक्तित्वहरूको शरीर छाड्नुको पनि आफ्नै महत्त्व छ र त्यो संसारकै लागि आफैमा एउटा ठूलो घटना बन्ने गर्दछ।**

दीक्षित गराउनुभयो, आवश्यक मार्गनिर्देशन प्रदान गरी आगामी युग आध्यात्मिक युग हुने कुराको शंखघोष गर्नुभयो। भ्रम एवं काल्पनिक भय र त्रासमा अल्झिरहेको समाजलाई स्पष्ट मार्गनिर्देशन प्रदान गरी आध्यात्मिक वातावरणको भावभूमि तयार गरिदिनुभयो र यस आध्यात्मिक भावभूमिबीच थुप्रै शिष्य-शिष्याहरू तयार पारिदिनुभयो। उहाँले 'अबका दिन मेरा शिष्यहरूले नै आध्यात्मिक युगको सूत्रपात गर्नेछन्' भन्ने उद्घोष गर्नुभएको छ। यसरी देहगतरूपमा गर्नुपर्ने सम्पूर्ण कार्यहरू पूरा गरी बाँकी कार्य आफ्ना शिष्यहरूको काँधमा जिम्मा लगाई परमपूज्य सद्गुरुदेवले आफ्नो स्थूल शरीरबाट ३ जुलाई १९९८ मा महाप्रयाण लिनुभएको थियो।

सामान्य व्यक्तिहरू जन्मनु र मर्नुको कुनै अर्थ छैन, कुनै गणना छैन। तर त्यस्ता व्यक्तित्वहरूको शरीर छाड्नुको पनि आफ्नै महत्त्व छ र त्यो संसारकै लागि आफैमा एउटा ठूलो घटना बन्ने गर्दछ। परमपूज्य सद्गुरुदेवको महाप्रयाण संसारलाई नै थर्काउने घटना बन्न पुग्यो, सारा मानव समुदाय एवं दैवी सत्तालाई समेत

तयार पारी आफ्ना शिष्यहरूलाई आवश्यक मार्गनिर्देशन दिँदै आफूसँगको आत्मिक सम्बन्धलाई प्रगाढ बनाई महाप्रयाण लिने संकेत दिनुभएको थियो। उहाँको प्रत्येक वाणीबाट भविष्यमा शिष्यहरूकै माध्यमबाट यस धरामा केही हुन्छ भन्ने कुरा प्रष्ट हुन्छ। गुरु-शिष्यको सम्बन्ध कुनै शरीरको सम्बन्ध होइन, यो त आत्माको सम्बन्ध हो, युगौंयुगदेखिको शाश्वत् सम्बन्ध हो। शरीर छाड्दैमा यो सम्बन्धमा कुनै फरक पर्दैन, कारण गुरु-शिष्य सम्बन्ध आत्माको हुन्छ, प्राणसँग जोडिएको हुन्छ, अजर, अमर र शाश्वत् हुन्छ।

हाम्रो सामु महाप्रयाण दिवस नजिक आइरहेको छ। परमपूज्य सद्गुरुदेवले महाप्रयाण लिनुभएको पनि बाह्र वर्ष भइसकेको छ। उहाँले शिष्यहरूको काँधमा छोडेर जानुभएको जिम्मेवारीलाई हामीले कति हदसम्म पूरा गर्न सक्षम भयौं ? यो कुरा आज प्रत्येक शिष्यले सोच्ने बेला आएको छ। सानातिना कुराहरूमा अल्झिएर महान् योजनामा अगाडि बढ्ने हाम्रो संकल्प एवं कार्यमा बाधा त उत्पन्न भएको छैन ? सबैले विचार गर्ने बेला आएको छ।

हलचल गराउने, स्तब्ध बनाउने ठूलो ऐतिहासिक घटना बन्न पुग्यो। एक अद्वितीय युगपुरुष जो आफैमा सम्पूर्ण सिद्धि, शक्ति, क्षमताका पूँजीभूतस्वरूप हुनुहुन्छ, यस्ता अवर्णनीय, अनिर्वचनीय, महायोगीको महाप्रयाण पृथ्वी माताको लागि समेत एउटा दु:खद घटना थियो। आफ्नो सत्य धर्म छोडेर असत्य, कुकर्ममा लागिरहेका आजका मानिसहरूको भार सहेर बस्नुभएकी करुणाकी खानी ममतामयी धर्तीमाताको वेदनालाई कम गरी पृथ्वीतटलाई नै स्वर्ग बनाइदिने, सिद्धाश्रम बनाइदिन सक्ने युगपुरुषको स्थूल उपस्थिति आफैमा कति महत्वपूर्ण थियो, कति अतुलनीय थियो भन्ने कुरा क्षमतावान् व्यक्तिहरूबाट लुकेको छैन, दैवी शक्तिहरूबाट छिपेको छैन। यो त प्रकृतिको गर्भभित्र गर्वशालीरूपमा दैदीप्यमानरूपमा समाहित छ।

परमपूज्य सद्गुरुदेवले महाप्रयाण लिनुअघि नै आध्यात्मिक युगका लागि आवश्यक पूर्वाधारहरू

परमपूज्य सद्गुरुदेवले शङ्खघोष गर्नुभएको आध्यात्मिक युग ल्याउन हामी सम्पूर्ण शिष्यले विगतका कमी, कमजोरीहरूलाई सुधारेर अगाडि बढ्ने बेला आइसकेको छ। आध्यात्मिकरूपबाट अगाडि बढिरहेका सम्पूर्ण मानवलाई हौसला, प्रेरणा दिँदै आगामी युग अध्यात्ममय बनाउन कम्मर कस्ने बेला हो अहिलेको अवस्था। यसैले अन्तमा सम्पूर्ण शिष्य समुदायलाई, सम्पूर्ण मानवलाई परमपूज्य सद्गुरुदेवले सद्बुद्धि, सत्प्रेरणाका साथ अनुकम्पा, कृपा एवं आशीर्वाद प्रदान गर्नुहोस् भनी प्रार्थना गर्दछौं।

जय गुरुदेव !

# गौरक्षाका लागि ध्यान दिऔं

हाम्रो देशमा सबै कुरामा राजनीति गर्ने बडो हाँस्यास्पद प्रचलन रहेको छ । अरुमा त राजनीति गरेकै छन्, गाईमाथि पनि राजनीति गरेर हदैसम्म निकृष्ट भएका देखिन्छन् । यहाँसम्म कि गौबध गर्नेलाई पनि राजनीतिक संरक्षण मिलिरहेको छ, उनीहरुलाई दलले बचाएका देखिन्छन् । साम्प्रदायिकताको नाममा गाईलाई अघि सारेर युद्ध गर्न तम्सनेहरुको जमातको पनि कमी छैन यहाँ । सबैको हरेक प्रकारले हितैषी गाईलाई पनि दलगत स्वार्थले हेरिन्छ, सम्प्रदाय विशेषको मात्र भनी तिरस्कार गरिन्छ । केही रकमका लागि गौबध गरी त्यसको मासु बेच्ने नरपिशाचहरुको पनि कमी छैन यहाँ । यस्तो घृणित कृत्य त्याग्ने बेला आएको छ, गाईमाथि राजनीति छोड्ने बेला आएको छ ।

गाई हामी सबैका महामहिमामय आमा हुन् । यस्तो अद्भुत महिमाले गर्दा नै हामी गाईलाई गौमाता भनेर सम्बोधन गर्दछौं । गाई सबै प्रकारले पूज्य छन् । समस्त वेद, शास्त्र, पुराण, रामायण, भागवत्, महाभारत आदि गौमाताको महिमाले भरिएको छ । यस्ता गौमातालाई पनि हामी राजनीतिको तराजुले तौलने गर्छौं र यसैको आँखाले हेर्ने गर्छौं । यो कतिसम्म लाजमर्दो कुरा हो भन्ने कुरा स्मरण गर्ने बेला आइसकेको छ । गाईमाथिको राजनीति, गाईप्रतिको हेपाहा प्रवृत्ति र स्वार्थी मनोवृत्तिलाई निरुत्साहित गर्दै गाईको सर्वोतोमुखी हित सोच्ने बेला आइसकेको छ । गौमाताको रक्षा र सेवाभन्दा दोस्रो ठूलो कुनै महान् पुण्य छैन । यस्तो पुण्य गर्न पाउनु पनि जीवनको सबैभन्दा ठूलो पुरुषार्थ हो, तप हो, अनुष्ठान हो भन्ने कुरामा अवश्यै ध्यान दिएर तलका केही नियमलाई मनोयोगपूर्वक पालन गर्ने बेला आएको छ–

१. गाईलाई कहिल्यै बिर्सेर पनि भैंसी, बाख्री आदि अन्य पशुजस्तो साधारण पशु ठान्नुहुन्न । गाई सामान्य पशु होइन । गाईको शरीरमा ३३ करोड देवीदेवताहरुको निवास छ । गौमाता परब्रह्म श्रीकृष्णका परमाराध्या र भवसागरबाट पार लाउने साक्षात् देवी हुन् ।
२. हामीले आफ्नो स्थानमा गौमातालाई राख्नुपर्छ र उनको तन, मन, धनले सेवा गर्नुपर्छ ।
३. प्रातःकाल उठ्नासाथ श्रीभगवत्स्मरण गरेपछि यदि सबैभन्दा पहिले गौमाताको दर्शन गर्न पाइएमा यसलाई आफ्नो परम सौभाग्य मान्नुपर्छ । गौमाताको प्रातःकाल नित्य दर्शन गर्नुपर्छ ।
४. गौमातालाई देख्ना साथ अति नै श्रद्धा-भक्तिका साथ प्रणाम गर्नुपर्छ ।
५. यदि बाटोमा हिँड्दा कतै गौमाता आइरहेको देख्यौं भने उनलाई आफ्नो दायाँतिरबाट जान दिनुपर्छ ।
६. जहाँसम्म हुन सक्छ गौमाताको दूध मात्रै पिउनुपर्छ र गाईको घिउ मात्रै प्रयोग गर्नुपर्छ । विदेशबाट आयातीत बट्टाको दूध कहिल्यै पनि पिउनु हुँदैन । कोटोजम नामक नक्कली घिउमा सुँगुरको बोसो मिसाइएको हुन्छ ।

## गौमाताबाट प्राप्त हुने फाइदाहरू

- प्राकृतिक पर्यावरणको रक्षा
- गोमूत्रबाट अन्नबाली रक्षक औषधिहरू
- गोबरबाट उत्तम खाद
- दूध दहीबाट अमृतमय गुण
- गोमूत्रबाट मानवोपयागी औषधिहरू
- समुदायको उन्नति, रोजगारी, स्वावलम्बन
- मानवीय गुणहरूमा वृद्धि
- गोरक्षाबाट देशरक्षा

यसलाई बिर्सेर पनि कहिल्यै प्रयोग गर्नुहुन्न । गाई र सुँगुरको बोसोबाट बनाइएका साबुन कदापि काममा ल्याउनुहुन्न, ठूलो पाप लाग्नेछ ।

७. गौमातालाई न कहिल्यै मार्न हुन्छ, न त कहिल्यै सताउन हुन्छ । उनलाई कुनै पनि प्रकारको कष्ट दिनु हुन्न किनकि यस्तो कार्यबाट २१ जन्म घोर नरकमा जान्छ ।

८. गौमातातिर फर्काएर बिर्सेर पनि खुट्टा तेर्स्याउनु हुन्न, न त खुट्टा तेर्स्याएर सुत्न नै हुन्छ । गौमातालाई आफ्नो खुट्टाको स्पर्श कहिल्यै पनि गर्नु हुन्न र उनीमाथि कहिल्यै थुक्न हुँदैन ।

९. गौमातालाई घरमा राखेर कहिल्यै पनि भोको, प्यासी राख्न हुन्न र गर्मीमा घाममा बाँध्नु हुन्न । जाडोको बेला उनलाई चिसोमा बाँध्नु हुन्न । जसले गाईलाई भोको र प्यासमा राख्छ र उनलाई सर्दीगर्मीबाट बचाउँदैन, उसको कहिल्यै श्रेय हुँदैन । गाईलाई पेटभरि खुवाउनु पर्छ र स्वच्छ पानी पिलाउनु पर्छ । गाईको अति नै सेवासुश्रुषा गर्नुपर्छ र खुबै प्रसन्न राख्नुपर्छ । गाई लोकमाता हुन् ।

१०. नित्यप्रति भोजन बनाउने बेला सबैभन्दा पहिले गाईको लागि रोटी बनाउनु पर्छ । गोग्रास निकाल्नुपर्छ र गाईलाई नित्य रोटी खुवाउनुपर्छ । गोग्रासको ठूलो महत्त्व छ ।

११. गाईका लागि चरणि बनाउनुपर्छ र त्यसमा नित्यप्रति पवित्र ताजा चिसो पानी भर्नुपर्छ जसलाई पिएर गाई-गोरु प्रसन्न होऊन् र हाम्रा २१ पिँढी तरुन् । यो सबैको कर्तव्य हो ।

१२. अनाथ गाईका लागि आफ्नो तर्फबाट हरिया हरिया घाँसको व्यवस्था गर्नुपर्छ जसलाई खाएर गाईको पेट भरियोस् र उनीहरु सुखी होऊन् ।

१३. बिर्सेर पनि आफ्ना गाईलाई गोभक्षकलाई बेच्नु हुन्न । यस्तो कार्यलाई पाप मानिन्छ । गाईको रक्षा र पोषणको ध्यान त्यसबेला पनि राख्नुपर्छ ।

१४. गाईलाई त्यस्तै ब्राह्मणलाई दान दिनुपर्छ जसले वास्तवमा गाईलाई पालून्, गाईको रक्षा सेवा गरुन् र कसाईंलाई नबेचून् । अनधिकारीलाई गौदान गर्नु घोर पाप हो ।

१५. गाईलाई कहिल्यै पनि आफ्नो जूठो खुवाउनु, पिलाउनु हुन्न । गाई साक्षात् जगदम्बा हुन् । यिनलाई जूठो खुवाउँदा पिलाउँदा कोही सुखी रहन सक्दैन ।

१६. पूजनीय गाईलाई कृत्रिम गर्भाधान गराउनु

हुन्न, यो घोर पाप र अक्षम्य अपराध हो । विदेशी साँढे, जो गाई-भैँसी मिलाएर वर्णसंकर जनावर हो, त्यस वर्णसंकरको वीर्यलाई विदेशबाट मगाएर र त्यस वीर्यलाई कुखुराको फुलसित गाईको गर्भाशयमा राख्नु र यही पापलाई नश्ल सुधारको नाम दिनु घोर अपराध हो। यसबाट आफ्नो २१ पिँढी नरकमा पर्नुपर्ने हुन्छ। गाईको नस्ल सुधारको नाममा नस्ल संहार गर्ने काम हो यो। यस घोर अपराधबाट बच्नुपर्छ ।

१७. नित्य गाईको परम पवित्र गोबरले भान्छालाई लिप्नुपर्छ र पूजास्थानलाई पनि गौमाताको गोबरले लिपेर शुद्ध गर्नुपर्छ ।

१८. गाईको दूध, घिउ, दही, गोबर र गोमूत्र यी पाँचद्वारा तैयार गरिएको पञ्चगव्यद्वारा मनुष्यको अस्थिगत पाप पनि शमन हुन्छ। यसैले समय समयमा पञ्चगव्यको सेवन गर्दै रहनुपर्छ । गाईको गोबरमा लक्ष्मी र गोमूत्रमा गङ्गाको वास छ। यसबाहेक गोबर र गोमूत्रको दैनिक जीवनमा प्रयोग गर्नाले पापको नाश र गोमूत्रको औषधिको रुपमा सेवनबाट रोगाणु नष्ट हुन्छ ।

१९. जुन देशमा गौमाताको रगतको एक विन्दु मात्रै पनि झर्छ, त्यस देशमा गरिएका योग, ध्यान, दान-पुण्य आदि सबै शुभ कर्म निष्फल हुन जान्छन् र सबै धर्म-कर्म पनि व्यर्थ हुन जान्छन् ।

२०. यदि नित्यप्रति गौमाताको पूजा-आरती, परिक्रमा गरिन्छ भने यो निकै श्रेष्ठ कार्य हो । तर नित्य यस्तो गर्न सकिँदैन भने पनि वर्षमा एकपटक गोपाष्टमीको दिन त कमसेकम अवश्य नै व्रत राखेर गौमाताको श्रद्धा प्रेमले पूजा गर्नुपर्छ र त्यस दिन गौमाताको आरती, परिक्रमा आदि गर्नुपर्छ र गौमातालाई मिष्ठान्नादि खुवाउनु पर्छ ।

२१. गाई यदि बिरामी, लंगडी-लूली भएमा उनलाई तन-मन-धनले सदा सेवासुश्रुषा गर्नुपर्छ र औषधि दिनुपर्छ । उनको रेखदेख तत्परतापूर्वक गर्नुपर्छ ।

२२. गाईको रक्षार्थ यदि प्राणै दिन परेमा पनि सहर्ष दिनुपर्छ। यसबाट निश्चितरुपमा श्रीगोलोकधामको प्राप्ति हुन्छ । यसमा अलिकति पनि शंका गर्न पर्दैन ।

२३. गौमाता यदि कुनै खाल्डाखुल्डी, कुनै कुवामा खसेकी छन् भने अथवा कुनै दलदलमा फँसेकी छिन् भने सबै काम छोडेर उनलाई निकाल्ने र बचाउने प्राणप्रणले प्रयत्न गर्नुपर्छ। यो सबैभन्दा ठूलो योग हो, यज्ञ हो, जप-तप हो, पूजा-पाठ हो तथा दान-पुण्य हो, यस कुराको स्मरण गर्नुपर्छ ।

२४. जसले बाच्छाहरुलाई गोरुको हलोमा जोतेर उनीहरुलाई नराम्ररी पिट्छ, सताउँछ, काँडा घोप्छ, गाडामा जोतेर उनीहरुको सामर्थ्यभन्दा धेरै बोझ लाद्छ, उनीहरुलाई घोर नरकको प्राप्ति हुन्छ र उनीहरुले गरेका दान-पुण्य सबै निष्फल हुन जान्छन् । यस्तो कहिल्यै पनि गर्नु हुन्न ।

२५. जसले पानी पिउँदै गरेको र घाँस खाँदै गरेको गाईलाई हटाउँछ, ऊ पापको भागी बन्छ। गाईलाई कहिल्यै बिर्सेर पनि यस्तो बेला हटाउनु हुन्न ।

२६. यदि तीर्थ यात्रा गर्ने इच्छा छ र शरीरमा बल र पैसा नभएको कारण असमर्थ हुनुहुन्छ भने चिन्तित हुनुपर्दैन । पूजनीय गौमाताको दर्शन गर्नुहोस्, उनको पूजा गर्नुहोस् र सर्वतीर्थमयी गौमाताको परिक्रमा गर्नुहोस् । गौमातालाई मधुर पकवान्, गुड वा मिठो रोटी खुवाउनुहोस् । यसप्रकार उनको सेवा गर्नुहोस् । बस्, घरै बसेर तेत्तीस करोड देवीदेवताहरुको पूजन हुन्छ किनकि गौमातामा समस्त देवीदेवताहरुको निवास हुन्छ। यसैले घरमा बसेरै पनि समस्त तीर्थ यात्राको सुफल प्राप्त हुन जान्छ । यो अति नै सरल र सुलभ साधन हो, यस्तो गर्नबाट नचुक्नुहोस् ।

**यदि तीर्थ यात्रा गर्ने इच्छा छ र शरीरमा बल र पैसा नभएको कारण असमर्थ हुनुहुन्छ भने चिन्तित हुनुपर्दैन। पूजनीय गौमाताको दर्शन गर्नुहोस्, उनको पूजा गर्नुहोस् र सर्वतीर्थमयी गौमाताको परिक्रमा गर्नुहोस्। गौमातालाई मधुर पकवान्, गुड वा मिठो रोटी खुवाउनुहोस्।**

२७. जसले गौरक्षाको नाममा, गौशालाको नाममा रुपैँयाँ, सम्पत्ति थुपार्छ र त्यसलाई आफै खान्छ भने त्यो भन्दा ठूलो पापी अरु हुन सक्दैन। यस्तो कार्यबाट बच्नुपर्छ। गौमाताका लागि आएको पैसा एक पैसा पनि आफ्नो कार्यमा बिर्सेरै पनि लगाउनु हुन्न र जति सकिन्छ आफूलाई तन-मन-धनले गोहितमा लगाउनु पर्छ। तर गाईको हकको द्रव्य र स्वत्व कहिल्यै बिर्सेर पनि लिन हुन्न । यसैमा भलाई छ । गौमाताको नाममा पैसा खानेहरुले नरकको कीरा बन्नु पर्ने हुन्छ। जय गुरुदेव !

# शिष्य प्रेम

जुट्दै छौं है हामी पनि तिम्रो आवाज बाँड्नलाई
कस्दै छौं है गहिरो नाता पाइँदैन नि छोड्नलाई
नौलो नौलो आकारमा जान्दा रै'छौ ढाल्नलाई
चमक कस्तो आउँछ भनी जान्दा रै'छौ साध्नलाई
छैन चिन्ता अब डर तिम्रो साथ पाएपछि
भट्की कतै अल्मलिँदा सन्तोष थिएन अलिकति
डोहोऱ्याउँदै ल्याउँदा रै'छौ सत्मार्गमा ल्याउनलाई
फुर्सद छैन अचेल मलाई मन्दिर मस्जिद धाउनलाई
पाउमै संसार पाएपछि,
दीयो बोकी सूर्य खोज्न को पो जान्थ्यो होला पछि
बासै बसाई तेत्तीसकोटि ल्याउँदा रै'छौ भेटाउनलाई
जाल बुन्दा रै'छौ हाम्रो दोष कर्म मेटाउनलाई
ल्याउने तिमी पुऱ्याउने तिमी हामी भित्र के नै छ र
ज्ञान तिमी ज्योति तिमी के के अट्छ हदै भर
भरिदेउ दिव्य ज्ञान तयार छौं है थाप्नलाई
शिष्य प्रेम अथाह रै'छ कस्ले सक्छ नाप्नलाई ?

जय गुरुदेव !

- उमेश के.सी.
सुकुटे आरती सञ्चालन केन्द्र,
बाह्रबिसे, सिन्धुपाल्चोक ।

मन्त्र तन्त्र यन्त्र विज्ञानसम्बन्धी
नेपालकै पहिलो रेडियो कार्यक्रम

## गोरक्ष निखिल सन्देश

gnsandesh@ssk.org.np

| स्थान | समय (बिहान) | स्टेशन | मेगाहर्ज |
|---|---|---|---|
| पोखरा | सोमबार ५:०५–५:४५ | माछापुच्छ्रे FM | ९१ |
| चितवन | सोमबार ५:००–५:४० | कालिका FM | ९५.२ |
| धनगढी | सोमबार ५:३०–६:०० | दिनेश FM | ९३.८ |
| सुर्खेत | शनिबार ५:१५–५:४५ | रेडियो भेरी FM | ९८.६ |
| गोरखा | सोमबार ५:००–५:३० | रेडियो गोरखा FM | ९२.८ |
| भैरहवा | बिहीबार ५:००–५:४५ | रूपन्देही FM | १०२ |
| दाङ घोराही | बिहीबार ५:३०–६:०० | रेडियो मध्यपश्चिम FM | ९१.४ |
| पाल्पा | बिहीबार ५:००–५:३० | रेडियो मुक्तिनाथ FM | ९०.८ |
| सिन्धुली | बिहीबार ५:००–५:३० | सिन्धुलीगढी FM | १०३.६ |
| दाङ लमही | शुक्रबार ५:३०–६:०० | रेडियो देउखुरी FM | १०५.८ |
| पोखरा | बिहीबार ५:३०–६:०० | रेडियो सराङ्कोट FM | १०४.६ |
| दमौली | बिहीबार ५:२५–५:५५ | दमौली FM | ९४.२ |
| कोहलपुर | बिहीबार ५:३०–६:०० | कोहलपुर FM | १००.२ |
| चितवन | सोमबार ५:००–५:४० | त्रिवेणी FM | १००.६ |
| दमौली | बुधबार ५:०५–५:३५ | मादीसेती FM | १०५.८ |
| दमौली | बुधबार ५:१०–५:३० | रेडियो तनहूँ FM | ९७.२ |

## हार्दिक श्रद्धाञ्जलि

जन्म स्वर्गारोहण
**२००६/०९/२९ स्व. त्रिलोचन भट्टराई २०६७/२/१४**

आत्मीय गुरु सेवक साधक हरि भट्टराईका बुबा त्रिलोचन भट्टराईको असामायिक स्वर्गारोहण भएकोमा शोक सन्तप्त परिवारजनमा धैर्य धारण गर्ने शक्ति प्राप्त होस् भन्ने कामना गर्दै हार्दिक समवेदना व्यक्त गर्दछौं । साथै दिवंगत आत्मामा सद्गुरुदेवहरुको कृपादृष्टि परोस् भनी परमपूज्य सद्गुरुदेवहरुसमक्ष प्रार्थना गर्दछौं ।

**सिद्धाश्रम शक्ति केन्द्र नेपाल**
**परिवार**

# मानिसमा अन्तर्निहित अद्‌भुत क्षमता

**मानिसमा अन्तर्निहित क्षमताको विषयमा परमपूज्य सद्‌गुरूदेव डा. नारायणदत्तश्रीमालीज्यू (परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज) ले दिनुभएको प्रवचनको नेपाली रूपान्तर यहाँ प्रस्तुत गरिएको छ।**

पतञ्जलीको विश्वविख्यात् ग्रन्थ छ– 'योग सूत्र' । उनले एउटै मात्र ग्रन्थ लेखेका छन् । सबैभन्दा पहिले उनी ऋषि थिए, योग सूत्रमा सबैभन्दा पहिले उनले बताएका छन् कि सम्पूर्ण ब्रह्माण्ड नै यसमा समाहित पनि हुन सक्छ र नगन्य पनि हुन सक्छ । तिमी-हामीजस्तै दुई हात, खुट्टा भएको मानिस अमेरिकाको राष्ट्रपति पनि बन्दछ, टाटा विडला पनि बन्दछ, भिखारी, दरिद्र, गरीब, असहाय पनि बन्दछ भने त्यही मानिस हिमालयमाथि विजय प्राप्त गर्ने तेञ्जिङ्ग पनि बन्दछ । उनीहरू र हामीमा कुनै अन्तर छैन । रुसका अन्नातोले ५८७ किलो वजन उठाउन सक्छन् तर हामीलाई २० किलो वजन उठाउन पनि गह्रौं हुन्छ । ५८७ किलो वजन उठाउनु मामुली कुरा होइन । यो अनन्त सम्भावना हो । मलाई सम्झना छ कि जब म बाल्यकालमा थिएँ, त्यस बेला राजस्थानमा कुनै Post Office थिएन । एउटा स्थानबाट अर्को स्थानमा चिठ्ठीपत्रहरू लैजानको लागि मानिसले नै पैदल हिँडेर वा ऊँटमा चढेर लैजानु पर्दथ्यो । त्यस बेला त्यो एउटा मानिसले एक दिनमा झण्डै १०० कि.मी.सम्मको चिठ्ठी पुऱ्याइदिन्थ्यो । यो आठ घण्टामा १०० किलोमिटर हिँडेर जानु सम्भव लाग्ने कुरो होइन । ऊ पनि मानिस नै थियो । मुरादावाद भन्ने ठाउँमा एकपटक म गएको थिएँ जहाँ 'पिली कोठी' नामक प्रख्यात् महल छ । त्यहाँ एउटा काम गर्ने मानिस थियो । म नैनीताल जाने बेलामा कहिलेकाहीँ त्यहाँ बस्ने गर्थें । त्यस कोठीमा एउटा टाँगा पनि थियो र म त्यो टाँगा (बग्गी) मा बसेर उनीहरूको खेत (फार्महाउस) मा जाँदै थिए तर त्यो घर मालिकले भन्यो कि तपाईं

जाँदै गर्नुस्, म केही बेरपछि आउँछु । उसले त्यहाँ काम गर्ने मानिसलाई मेरो टाँगासँगै जान अह्रायो । टाँगा वेगका साथ दौडिन लाग्यो । म त टाँगामाथि बसिरहेको थिएँ तर त्यो मानिस टाँगा सँगसँगै दौडिरहेको थियो । करिब चालीस कि.मी. टाढा काशीपुर भन्ने ठाउँमा त्यो फार्महाउस थियो । त्यहाँ पुगेपछि घोडा स्वाँ-स्वाँ गरिरहेको थियो तर घोडा सँगसँगै ४० कि.मी. दौडेर आएको त्यो मानिस सामान्य स्थितिमा थियो । ऊ पनि मानिस नै थियो । यसको अर्थ यो हो कि मनुष्यमा अनन्त सम्भावनाहरू छन् । यदि ती सम्भावनाहरूलाई एउटा निर्णयात्मक स्वरूपमा, निश्चितरूपमा अगाडि बढाउने इच्छा राख्दछ भने असम्भव भन्ने कुनै कार्य हुँदैन । असम्भव त हामी मान्दछौँ । थकावट भन्ने कुरा संसारमा छँदै छैन तर हामी थकावट महसुस गर्दछौँ, थकाइ मान्दछौँ र न्यूनता भन्ने कुरा हुँदै हुँदैन तर न्यूनता हामी ठान्दछौँ, हामी सोच्छौँ कि दुई घण्टा काम गरिसक्यौँ अब त थाकियो । वास्तविकता यो होइन तर हामी ठान्दछौँ कि हामी थाकिसक्यौँ । शरीर आफै कहिल्यै थाक्दैन । यदि थाक्थ्यो भने त्यो मानिस ४० कि.मी. कसरी दौडन सक्थ्यो ? १०० कि.मी. सम्म चिठ्ठी कसरी पुऱ्याउन सक्थ्यो ? ५८७ किलो वजन कसरी उठाउन सक्थ्यो ? एउटा सामान्य गरीब व्यक्ति अमेरिकाको राष्ट्रपति कसरी बन्न सक्थ्यो ? हामीले आफ्नो क्षमतालाई र सम्भावनाहरूलाई बुझेकै छैनौँ । हामी त्यहीँ अडिन्छौँ जहाँनेर हामी गतिशील हुन्छौँ 'बस् यति मात्रै म गर्न सक्छु' जहाँ यो भाव मनमा आयो त्यहाँ एउटा तलाउजस्तै हुन्छ । तलाउको पानी स्थिर हुन्छ, त्यसैले बिस्तारै-बिस्तारै फोहर हुँदै जान्छ र दूषित हुन्छ । तर नदीको पानी कहिल्यै फोहर हुँदैन किनकि नदी सधैँ अघि बढिरहेको हुन्छ, गतिशील हुन्छ ।

जब व्यक्तिले निश्चय गर्दछ कि आज म चालीस पेज टाइप गरेर मात्रै सुत्नेछु, आज दिनभरिमा मैले चालीस पेज टाइप गर्नु नै छ, तब चालीस पेज

अवश्य नै टाइप हुन्छ । तर जब उसले सोच्दछ कि आज पन्ध्र पेज भयो, हिजो त बाह्र पेज मात्रै भएको थियो, तब ऊ थकित हुन्छ र विश्राम लिने इच्छा हुन थाल्छ । यी सब सम्भावनाहरू हुन् । पतञ्जलीले योगसूत्रमा भनेका छन् '**शिष्य इति शक्तिः**' । शक्ति आफैमा तब बन्दछ जब शिष्य हुन्छ र शिष्य त्यो हुन्छ जसले केही सिक्ने इच्छा राख्दै अग्रसर हुन्छ । सिक्ने इच्छा राख्ने शिष्य होइन, सिक्ने इच्छा राख्दै अग्रसर हुने नै शिष्य हो । जति आज गरेको छ, आजभन्दा भोलि झन् अझ बढी गर्नेछु, भोलिको अपेक्षा पर्सी अझ ज्यादा गर्नेछु, पर्सीभन्दा निपर्सी झन बढी गर्नेछु । यदि मलाई यो काम सुम्पिएको छ भने सोच-विचार गरेर नै दिइएको छ, मैले यो काम आज गर्नु नै छ । त्यहाँ न जाडो हुन्छ, न गर्मी, न वर्षा, न आँधी, केही पनि हुँदैन । केवल हामी कल्पना गर्दछौँ कि धेरै चिसो छ र हामी जाडोले मर्न लागेका छौँ । जाडोमा पनि सयौँ मान्छेहरू राति कार्य गर्दछन्, प्रहरीहरूले गस्ती गर्छन् । गर्मीमा पनि पसिना-पसिना भएर मजदूरहरू काम गर्छन् । वास्तवमा कुनै पनि परिस्थितिहरू कुनै पनि प्रकारलेहाम्रो लागि बाधक हुँदैनन् । पतञ्जलीले पहिलोपटक महत्त्वपूर्ण कुरा भनेका छन् कि शक्ति कतैबाट पनि उत्पन्न हुँदैन । शक्ति तब उत्पन्न हुन्छ जब हामी शिष्य बन्दछौँ । शिष्यको अर्थ हो सिक्ने व्यक्ति, शिष्यको अर्थ हो अग्रसर हुने, गतिशील हुने व्यक्ति ।

**शक्ति तब उत्पन्न हुन्छ जब हामी शिष्य बन्दछौँ । शिष्यको अर्थ हो सिक्ने व्यक्ति, शिष्यको अर्थ हो अग्रसर हुने, गतिशील हुने व्यक्ति । शिष्यको मतलब कुनै शिक्षा ग्रहण गर्ने व्यक्ति होइन । एउटा दृढ ध्येय, लगन, क्षमता र जुन कार्य गर्न लागेको छ, त्यसलाई पूर्णताका साथ सम्पन्न गरिसकेपछि पनि सोचोस् कि अझ धेरै समय बचेको छ, अब म के गरौँ ? त्यो कार्य सकिइसकेपछि अझै पनि यति समय बचेको छ, फेरि म के गरौँ ? जब यो भोक, यो इच्छा, यो चिन्तन हुन्छ, तब ऊ सही अर्थमा शिष्य बन्दछ र।**

शिष्यको मतलब कुनै शिक्षा ग्रहण गर्ने व्यक्ति होइन । एउटा दृढ ध्येय, लगन, क्षमता र जुन कार्य गर्न लागेको छ, त्यसलाई पूर्णताका साथ सम्पन्न गरिसकेपछि पनि सोचोस् कि अझ धेरै समय बचेको छ, अब म के गरौँ ? त्यो कार्य सकिइसकेपछि अझै पनि यति समय बचेको छ, फेरि म के गरौँ ? जब यो भोक, यो इच्छा, यो चिन्तन हुन्छ, तब ऊ सही अर्थमा शिष्य बन्दछ र 'योगसूत्र'को यो आधारभूत सूत्र हो । हामीले यस सूत्रलाई बिर्सिसकेका छौँ, त्यसैले शिष्यता पनि बिर्सिसकेका छौँ । यसैले हामीले गुरुत्वलाई पनि बिर्सेका छौँ । गुरुत्वलाई यसकारण बिर्सिएका छौँ कि जब शिष्य नै छैन भने गुरुजस्तो कुनै शब्द नै छैन । गुरु शब्द तब न बन्दछ जब शिष्यजस्तो कुनै चीज हुन्छ । जब रात हुन्छ, तब न दिन हुन्छ । चौबीस घण्टा अँध्यारै अँध्यारो भयो भने, दिन कहाँबाट हुन्छ ? सूर्य कहाँबाट उदाउनेछ ? हामीले कसरी थाहा पाउनेछौँ कि यो दिन हो या रात । फरक कसरी थाहा पाउने ? फरक यसरी पाउन सकिन्छ कि जब अँध्यारो हुन्छ, त्यसलाई रात भनिन्छ र जब उज्यालो हुन्छ, त्यसलाई दिन भनिन्छ । यसैले तपाईंको मनमा गुरुत्वजस्तो शब्द छैन, त्यसैले तपाईंको मनमा शिष्यत्वजस्तो शब्द पनि छैन । तपाईंको मनमा आलस्य छ, प्रमाद छ, छल छ, झूट छ र छट्टुपना छ, बदमाशी छ, साथमा न्यूनताहरू पनि छन् र तिनीहरूलाई

नै तपाईंले गुण ठान्नुभएको छ । यी अवगुणहरू आजभन्दा दशहजार वर्षअघि पनि तपाईंसँगै थिए, आज पनि छन् र दश हजार वर्षपछि पनि यिनलाई अवगुण नै भनिन्छ । तपाईंले यसलाई गुण मान्नुहोला, यो तपाईंको श्रेष्ठता हो अथवा न्यूनता हो । जब व्यक्ति शिष्य बन्दछ, जब व्यक्ति डक्टर बन्दछ, वैद्य बन्दछ र तपाईंकै उमेरको वा तपाईंभन्दा कम उमेरको व्यक्ति ठूलो अफिसर बन्दछ, जिल्लाप्रमुख बन्दछ, तब उसले पूरै जिल्लाको भार सम्हाल्दछ, पूरै जिल्लाको प्रशासन सम्हाल्दछ । ऊ पनि तपाईं हामीजस्तै मानिस नै हो । उसले व्यस्त रहँदारहँदै पनि समय नै समय निकाल्दछ । ऊसँग समय नै समय हुन्छ । यो समय त धेरै छ तर तपाईं सोच्नुहुन्छ कि समय कम छ । आइन्स्टाइनले यसैलाई बताएका छन् कि एउटा मानिससँग एक दिनरातमा ३६५ दिनजति लामो समय हुन्छ यदि ऊ काम गर्ने लगनतर्फ अग्रसर हुन्छ र एक घण्टाको काम आधा घण्टामा पूरा गर्दछ, बीस मिनेटमै पूरा गर्दछ । यसैले कुनै व्यक्ति दश वर्षसम्म खाना नखाइकन पनि बाँच्न सक्दछ र पाँच किलो खाना थप्न पनि सक्छ । जे पनि गर्न सक्छ किनकि उसको शरीरमा अनन्त सम्भावनाहरू हुन्छन् । ती सम्भावनाहरूलाई चिन्ने क्षमता शिष्य स्वयंले आफैभित्रबाट उत्पन्न गर्दछ । अरूले बुझाउँदा तपाईं तर्क गर्न थाल्नुहुन्छ, कुतर्क गर्न थाल्नुहुन्छ र मनलाई बुझाउनुहुन्छ कि यस्तो हुनै

**जब इंग्ल्याण्डका गभर्नर वासिङ्टन भारतमा आए, तब उनी गान्धीजीलाई भेट्नका लागि साबरमती गए । त्यहाँ उनलाई गान्धीजीले तीन बजेर पाँच मिनेटदेखि तीन बजेर दश मिनेटसम्म कुरा गर्नेछु भनेर समय दिनुभयो । कुनै कारणवश उनी त्यहाँ ढिलो पुगे । तीन बजेर नौ मिनेटमा बल्ल गान्धीजीसँग भेट भयो । जब एक मिनेटसम्म कुरा भयो, गान्धीजी उठ्नुभयो र बाख्रालाई घाँस खुवाउन थाल्नुभयो । तब वासिङ्टनले सोचे कि म यति टाढा इंग्ल्याण्डबाट आएको छु, यिनी कस्ता मान्छे रहेछन् ?**

सक्दैन, सम्भवै छैन, बस सकियो । यही नै तपाईंको न्यूनता हो ।

यसकारण यस प्रसङ्गमा पनि यो भनिएको छ कि उनले आफ्नो एउटा शक्ति दिनुभयो, तागत दिनुभयो । तर तागत यस्तो चीज होइन कि हातले उठाएर कसैलाई दिन सकियोस्, उसलाई एउटा विचार दिइयो, एक चिन्तन, एउटा धारणा दिइयो । यो बताइयो कि तिमी पनि सिद्ध र सफल बन्न सक्छौ । उहाँले बताउनुभयो कि श्मशानमा रहेर पनि हामी गृहस्थ हुन सक्छौँ, गृहस्थमा रहेर पनि संन्यासीवत् रहन सक्छौँ, अनासक्त रहन सक्छौँ । विवाह गरेर पनि नगरेझैं रहन सक्छौँ । आफैमा निस्पृह रहन सक्छौँ, निश्चिन्त रहन सक्छौँ, निश्छल रहन सक्छौँ । यो उक्त 'योगसूत्र'को एउटा महत्त्वपूर्ण तथ्य हो र सम्पूर्ण ग्रन्थ यसै आधारमा रहेको छ, एउटा पूरै जीवनको अध्याय हो, जीवनलाई उन्नतितर्फ अग्रसर गराउने अध्याय हो । यसकारण जुन क्षण पतञ्जलीको यो योगसूत्र तपाईंले सुन्नुभयो, त्यसै क्षण त्यसलाई यदि व्यवहारमा उतार्न शुरु गर्नुभयो भने मात्र गरिन्छ । भावी योजना बनाएर यो सूत्र बुझ्न सकिँदैन । भोलिबाट यसलाई शुरु गर्नेछु, यस्तो हुन सक्दैन । या त तत्क्षण नै शुरु हुनेछ नभए हुने नै छैन । या त अहिल्यै यसलाई गर्नेछु र काम गर्ने प्रवृत्ति शुरु गर्नेछु, हैन भने गर्दिन किनकि हामीकहाँ कुम्भकर्ण पनि जन्मिए जो चौबीसै घण्टा सुतिरहन्थे र यस्ता पनि जन्मिए जो अनिद्रा थिए, इन्द्रजस्ता जो

सुत्दै सुत्दैनथे । दुवै प्रकारका ऋषिहरू जन्मिए, रावण पनि जन्मिए, राम पनि जन्मिए । यो त मानिसभित्रको लगन र क्षमताको कुरा हो कि ऊ कति तत्परता र लगनका साथ कुनै पनि कार्य गर्छ- चाहे सरसफाइ गर्ने कार्य होस् वा चाहे लेख्ने कार्य ।

जब महात्मा गान्धी बसेर जाँतोमा पीठो पिँध्दै हुनुहुन्थ्यो (उहाँ आफैले गहुँ पिँधेर रोटी बनाउनुहुन्थ्यो, कुनै मेसिन प्रयोग गर्नुहुन्नथ्यो) तब सर्वोच्च अदालतका एक वकील आएर भने कि म तपाईंको आन्दोलनमा सहभागी हुन चाहन्छु, मलाई तपाईंले कुनै काम सुम्पनुहोस् । गान्धीजीले भने– अहिले त यो काम छ कि तपाईं मसँग बस्नुहोस् र यो जाँतोमा गहुँ पिँध्नुहोस्, पीठो चाँडै निकाल्नु छ, त्यसपछि यता बस्नुहोला । उसले भन्यो– गान्धीजी, तपाईंलाई थाहा छ ? म वकील हुँ । गान्धीजीले भने– तपाईं वकील हुनुहुन्छ सर्वोच्च अदालतमा, यहाँ त होइन । यहाँ त यही काम गर्नुछ । यसबेला यही काम गर्नुहोस्, जब सर्वोच्च अदालत जानुहुन्छ तब आफ्नो काम गर्नुहोला । काम त्यो पनि नराम्रो होइन ।

जब बेलायतका गभर्नर वासिङ्टन भारतमा आए, तब उनी गान्धीजीलाई भेट्नका लागि सावरमती गए । त्यहाँ उनलाई गान्धीजीले तीन बजेर पाँच मिनेटदेखि तीन बजेर दश मिनेटसम्म कुरा गर्नेछु भनेर समय दिए । कुनै कारणवश उनी त्यहाँ ढिलो पुगे । तीन बजेर नौ मिनेटमा बल्ल गान्धीजीसँग भेट भयो । जब एक मिनेटसम्म कुरा

भयो, गान्धीजी उठेर बाख्रालाई घाँस खुवाउन थाले तब वासिङ्टनले सोचे कि म यति टाढा बेलायतबाट आएको छु, यिनी कस्ता मान्छे रहेछन् ? मसँग कुरा गर्न छोडेर बाख्रालाई घाँस खुवाउन थाले । के मसँग कुरा गर्नुभन्दा जरुरी बाख्रालाई घाँस खुवाउनु थियो ? त्यसपछि उनले गान्धीजीलाई भने– मिस्टर गान्धी, म बेलायतबाट आएको हुँ र म तपाईंसँग कुरा गर्न चाहन्छु । तर तपाईं त जङ्गली हुनुहुँदोरहेछ ।

यो सुनेर गान्धीजीले भने– जङ्गली म होइन, जङ्गली तपाईँ हुनुहुन्छ किनकि मैले तपाईँलाई पाँच मिनेट कुरा गर्नको लागि समय दिएको थिएँ । त्यो पनि त्यति नै जरुरी छ जति यो बाखालाई समयमा घाँस खुवाउनु जरुरी छ । यो काम पनि त्यति नै महत्त्वपूर्ण छ जति तपाईँसँग कुरा गर्नु महत्त्वपूर्ण छ । मेरा निम्ति कुनै पनि काम न्यून छैन । हामी सोच्दछौँ कि यस्तो काम हामी कसरी गर्न सक्छौँ ? हामी पीठो पिँध्ने काम कसरी गर्न सक्छौँ ? फोहर कसरी फाल्न सक्छौँ ? अथवा यो काम मेरो होइन ।

योग सूत्रको व्याख्या यो हो कि तपाईँभित्र अनन्त ऊर्जा भरिएको छ तर त्यो ऊर्जाको प्रयोग जम्मा एक प्रतिशत मात्रै गर्न सक्नुहुन्छ । त्यही ऊर्जालाई शक्ति भनिन्छ र त्यो शक्तिलाई शिवले प्रवाहित गर्न सक्नुहुन्छ । शिव जो कल्याण गर्नेवाला हुनुहुन्छ, जो गुरु हुनुहुन्छ, अरूलाई ज्ञान दिन सक्ने क्षमता राख्नुहुन्छ, जसले पहिल्यै शक्ति सञ्चय गरेर राख्नुभएको हुन्छ । यदि मलाई यस पत्रिकाको सदस्यता बढाउनु छ भने बढाएरै छाड्छु । कसरी बढाउने, त्यो तपाईँको ऊर्जा हो । यो आदेश बुझेर तयार पारिदिने तपाईँको ऊर्जा हो । जुन कुरा सिक्नु छ, त्यो तपाईँको ऊर्जा हो । जहाँ तपाईँ सोच्नुहुन्छ कि कसैले सिकाउँछ, कसैले भन्छ, कसैले आज्ञा दिन्छ, त्यहीँनेर तपाईँको न्यूनता शुरु हुन्छ । यहीँनेर पातञ्जलीको योग सूत्रलाई भुल्नुहुन्छ ।

यो उदाहरण, यो व्याख्या यस कुराको परिचायक छ कि यो शक्ति केवल भनिन्छ मात्र र भन्नुको मतलब दिनु हो, प्रवाहित गर्नु हो । त्यसपछि उसले स्वीकार गर्दछ, ऊ आफैमा योगी बन्दछ, ऋषि बन्दछ, उच्चकोटिको व्यक्तित्व बन्दछ, पतञ्जली बन्दछ, वशिष्ठ बन्दछ, राम, कृष्ण, बुद्ध एवं महावीर बन्दछ, अनातोली बन्दछ, लिङ्कन बन्दछ र गान्धी बन्दछ । उनीहरू हामीजस्तै नै थिए, हामीभन्दा पनि निम्न स्तरका थिए । उनीहरूसँग त्यति क्षमता पनि थिएन जति हामीसँग छ । एउटा सार्कीका छोरा थिए लिङ्कन ।

जीवनको प्रवाह हाम्रो लागि यस कुराको साक्षी रहोस् कि पतञ्जलीको यस योग सूत्रलाई ध्यानमा राखौँ- 'हामी प्रत्येक कार्यलाई सुव्यवस्थित तरीकाबाट गरौँ र दोषलाई अरूमाथि नथोपरौँ कि हामी यो कसरी गर्न सक्छौँ र ? यो त हामीसँग छँदै छैन । म के गर्न सक्छु र ?' म भन्छु कि यसभन्दा घटिया मानिस अरू कोही हुनै सक्दैन । त्यतिखेर त म भन्छु कि 'ठीक छ, ठीक छ, You are right, all right ।' तर त्यही समयमा म सोच्छु 'यो घटिया मानिस हो जसलाई आफ्नो दोष अरूमाथि थोपर्ने बानी परेको छ । म कसरी भन्न सक्छु ? यो कुरा त मसँग छँदै छैन ।' छँदै छैन भन्ने कुरा त मलाई पनि थाहा छ । म यो जान्न चाहन्छु कि नहुँदा नहुँदै पनि तपाईँले कसरी गर्नुभयो ? यो तपाईँको विशेषता हो । कारमा चढेर तपाईँ कुनै काम गर्नुहुन्छ, त्यो कुनै ठूलो कुरा होइन । तर तपाईँसँग साधन नै नभए पनि तपाईँले गएर कुनै काम गर्नुभयो भने त्यो चाहिँ ठूलो कुरा हो ।

जब तपाईँ यस्तो बन्नुहुनेछ, तब सही अर्थमा पतञ्जली बन्न सक्नुहुनेछ, तब यस उद्धरणको अर्थ तपाईँले बुझ्न सक्नुहुनेछ, तब सही अर्थमा तपाईँ शिष्य बन्न सक्नुहुनेछ, तब मलाई वास्तविक प्रसन्नता हुनेछ । तपाईँ यस्तो बन्नुहुनेछ, यो प्रभात तपाईँको जीवनमा परिवर्तनकारी हुनेछ, यस्तै नै म तपाईँलाई आशीर्वाद दिन्छु, तपाईँको कल्याणको कामना गर्दछु । ◆

*(परमपूज्य सद्गुरुदेव श्री शिव गोरक्षसम्बन्धी विभिन्न सत्य तथ्य कुराहरूको बारेमा जानकारी दिने क्रममा श्री सावर संरचना शक्ति केन्द्र नेपालद्वारा प्रकाशित तथा योगी शिवशक्तिश्वरानन्द एवं योगी कर्मवीरानन्दद्वारा लिखित 'श्री शिव गोरक्ष-नाथंप्रदाय' ग्रन्थबाट विभिन्न प्रसंगहरू क्रमश: प्रकाशित गर्दै आइरहेका छौँ ।)*



# नवनाथ उत्पत्ति प्रसङ्ग

ण नाथ सम्प्रदायलाई जीवन्त राख्ने नाथ योगीहरू वास्तवमा को हुनुहुन्छ र उहाँहरूको उत्पत्ति के कसरी भयो भन्ने सम्बन्धमा शास्त्रहरूमा उल्लिखित प्रसङ्गहरूलाई कोट्याउने कोशिश यहाँ गरिएको छ । नवनारायणहरू नै नवनाथको रूपमा अवतरण हुनभएको वास्तविकता यस प्रसङ्गबाट प्रष्ट हुन्छ–

द्वापरको अन्त र कलियुगको प्रारम्भमा भगवान् विष्णुले नवनारायणलाई द्वारकाबाट ल्याउनको लागि नारद मुनिलाई पठाउनुभयो । त्यस समय भगवान् विष्णु सुनको सिंहासनमा विराजमान हुनुहुन्थ्यो । उहाँको नजिक उद्धव विराजमान थिए । यसै बेलामा कवि नारायण, हरिनारायण, प्रबुद्ध, पिप्पलायन, करभंजननाथ आदि सबै नवनारायण अन्तरिक्ष विमानद्वारा आइपुग्नुभयो । उहाँहरू आउनुभएको देखेर विष्णु भगवान्ले सिंहासनबाट उठेर उहाँहरूलाई आलिङ्गन गरी आफ्नो नजिकै सिंहासनमा बसाउनुभयो । आफ्नो भव्य स्वागत देखेर नवनारायण भन्नुहुन्छ- "प्रभु, हजूरले हामीलाई यहाँ किन बोलाउनुभएको हो ?" तब विष्णु भगवान् भन्नुहुन्छ- "तपाईंहरू सबैले कलियुगमा अवतार लिनुपर्छ । जसरी राजहंस हाँसले दूध अलग र पानी अलग गर्दछ, त्यसरी नै पृथ्वीमा अवतार लिएर तपाइँहरू सबैले मृत्युलोकका मानिहरूको कष्ट हटाउनुपर्छ ।"

विष्णु भगवान्को आज्ञा सुनेर कवि नारायण भन्नुहुन्छ- "प्रभु, हामीले अवतार कस्तो किसिमले लिनुपर्नेछ र के गर्नुपर्नेछ ? कृपा गरेर हामीलाई बताउनुहोस् ।"

यति सुनेपछि विष्णु भगवान् भन्नुहुन्छ- "तपाईंहरू सबै पृथ्वीमा अवतार लिएर नाथ सम्प्रदाय स्थापना गर्नुहोस् । तपाईंहरू यो नसम्झनुहोस् कि केवल तपाईंहरूले मात्र अवतार लिनुपर्नेछ । तपाईंहरूका साथ मेरा अरू पनि अंशावतार पनि हुन्छन् । वाल्मीकि, व्यासजी, उद्धवजी, जावंत, ज्ञानदेवको नामबाट मैले पनि अवतार लिनेछु । ब्रह्मदेवले सोपान, आदिमाया, मुक्तावाईको नामबाट अवतार लिनुहुनेछ । हनुमानजी रामदासको नामबाट र भक्त कुब्जा मैनावतीको नामबाट अवतार लिनेछन् । हामीले

कलिकालमा 'भक्ति'लाई प्रश्रय दिनुछ ।"

यति सुनिसकेपछि कवि नारायण भन्नुहुन्छ- "प्रभु, हामीले कहाँ र कसरी अवतार लिनुपर्छ, कसरी प्रकट हुनुपर्छ, यसका लागि पनि आज्ञा होस् ।"

प्रभु भन्नुहुन्छ- "पहिले नै व्यास मुनिले भविष्य पुराणमा सबै वर्णन गरिदिनुभएको छ कि ब्रह्माजीबाट अठासी हजार ऋषिहरूको जन्म हुनेछ । त्यसै समयमा ब्रह्माजीको अंश माछाले निल्नाले त्यसको पेटबाट कवि नारायण (मत्स्येन्द्रनाथ) को जन्म हुनेछ । भगवान् शंकरले तेस्रो नेत्रबाट अग्नि निकालेर कामदेवलाई भस्म गर्नुहुनेछ । त्यसपछि त्यो अग्निको प्रभावबाट अन्तरिक्ष नारायणले अग्निको गर्भबाट अवतार लिएर जालन्धरनाथ योगी नामबाट प्रसिद्ध हुनेछन् । कुरुवंशी राजा जन्मेजयले नागयज्ञ गर्नेछन् । उनैको वंशका वृद्धश्रवा राजाले यज्ञ गर्नाले अग्निद्वारा अठासी हजार ऋषि उत्पन्न हुनेछन् । ब्रह्माजीको केही अंश रेवा नदीको किनारमा पनि झर्नेछ, जसबाट चमस नारायण रेवण सिद्धको नामबाट प्रकट हुनेछन् । त्यस्तै नै केही अंश एउटी नागिनीले खानेछिन् र तब नागिनीको गर्भमा ब्रह्मबीज छ भन्ने जानेर आस्तिक ऋषिले त्यसलाई वरको वृक्षमुनि लुकाएर राख्नेछन् । दिन पूरा भएपछि त्यसले छोडेको अण्डाबाट आविर्होत्र नारायणले जन्म लिएर वर सिद्धिप्रदाता नागनाथको नामबाट प्रसिद्ध हुनेछन् ।

मत्स्येन्द्रनाथले सिद्ध गरेको सूर्य यन्त्र गोबरको थुप्रोमा फ्याँक्नाले हरिनारायण प्रकट हुनेछन् र गोरख गुरुका नामले प्रसिद्धि पाउने छन् ।

त्यस्तै, एक अर्को प्रसङ्गअनुसार ब्रह्माजीबाट साठी हजार बालखिल्य ऋषिहरू जन्मनेछन् र ती फोहरका साथ भागिरथी गङ्गामा पर्नेछन् । कुशको झाडीमा अड्किनाले त्यसबाट पिप्पलायन प्रभु प्रकट भएर चर्पटीनाथ नामबाट प्रसिद्ध हुनेछन् । कैलिक मुनिले आफ्नो भीक्षा पात्रलाई छोपिदिनेछन् जसबाट राजा भर्तृहरिको जन्म हुनेछ । त्यस्तै, ब्रह्मबीज हात्तीको कानमा पर्नेछ जसबाट प्रबुद्ध नारायणले अवतार लिनेछन् जो कानिफानाथ नामबाट प्रसिद्ध हुनेछन् । गुरु गोरखले माटाको गाडीचालक बनाएर करभंजन नाथको जन्म हुनेछ ।"

यसप्रकार प्रभुले कुन कुन नारायणले कसरी अवतार धारण गर्नेछन् भनेर यो रहस्य राम्ररी सम्झाउनुभयो ।

# २०६७ आषाढ महिनाका शुभ समयहरू

**आषाढ ६, १३, २०, २७ गते (आइतबार)**
**सर्वश्रेष्ठ– दिन ३:३६–४:२४**
**रात्रि ४:२४–६:००**
**श्रेष्ठ– दिन ६:००–८:२४, ११:३६–२:४८**
**रात्रि ६:४८–१०:००, १२:२४–२:४८**

**आषाढ ७, १४, २१, २८ गते (सोमबार)**
**सर्वश्रेष्ठ– रात्रि २:४८–३:३६**
**श्रेष्ठ– दिन ६:००–७:२४, ९:१२–११:३६**
**रात्रि ८:२४–११:३६**

**आषाढ १, ८, १५, २२, २९ गते (मंगलबार)**
**सर्वश्रेष्ठ– रात्रि ५:१२–६:००**
**श्रेष्ठ– दिन १०:००–११:३६, ४:३६–६:००**
**रात्रि ६:४८–१०:००, १२:२४–२:४८**

**आषाढ २, ९, १६, २३, ३० गते (बुधबार)**
**सर्वश्रेष्ठ– दिन ६:४८–८:२४**
**श्रेष्ठ– दिन ८:२४–१०:००, २:४८–५:१२**
**रात्रि ७:३६–९:१२, १२:२४–२:४८**

**आषाढ ३, १०, १७, २४, ३१ गते (बिहीबार)**
**श्रेष्ठ– दिन ६:००–७:३६, १०:००–११:३६, ४:२४–६:००**
**रात्रि ९:१२–११:३६, २:००–४:२४**

**आषाढ ४, ११, १८, २५, ३२ गते (शुक्रबार)**
**सर्वश्रेष्ठ– रात्रि १०:२८–११:३६**
**श्रेष्ठ– दिन ६:००–६:४८, ७:३६–१०:००, १२:२४–३:३६**
**रात्रि ७:३६–९:१२, १:१२–२:४८**

**आषाढ ५, १२, १९, २६ गते (शनिबार)**
**सर्वश्रेष्ठ– दिन ६:००–६:४८**
**रात्रि ८:२४–९:१२**
**श्रेष्ठ– दिन १०:३६–१२:२४**
**रात्रि ९:१२–१०:४८, २:४८–३:३६, ५:१२–६:००**

**नोट:**
**दिन–भन्नाले बिहान ६:०० देखि साँझ ६:०० सम्म**
**रात्रि–भन्नाले साँझ ६:०० देखि अर्को बिहान ६:०० सम्म**

***परमपूज्य सद्गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यूद्वारा रचित 'ज्योतिष और काल निर्णय' ग्रन्थमा आधारित ।***

*यस स्तम्भअन्तर्गत हस्तरेखा विज्ञानअनुसार हस्तरेखासम्बन्धी जानकारीहरु पाठकवर्गसमक्ष राख्दै आइरहेका छौँ । आशा छ, यसबाट यहाँहरु लाभान्वित हुनुहुनेछ ।*

# आफ्नो हात आफै हेरौं

## हृदय रेखा ( अघिल्लो अंकबाट क्रमशः)

**तेस्रो प्रकारको हृदय रेखा :**

यस्तो प्रकारको हृदय रेखा बुध पर्वतमुनि भएर सूर्य पर्वतमुनि नै समाप्त हुन जान्छ। यस्ता व्यक्ति अदूरदर्शी तथा कुण्ठाग्रस्त हुन्छन्। यस्तो व्यक्तिको हृदय पनि कमजोर हुन्छ। स-साना कुरामा यस्तो व्यक्ति चिड्चिडिन्छन्। सही रूपमा भन्ने हो भने यस्ता व्यक्ति दयाहीन हुन्छन्। यस्ता व्यक्तिले दुःखीहरूको सेवा गर्दैनन् बरु उनीहरूको निन्दा गर्नमा नै आफ्नो सौभाग्य ठान्छन् । यस्तो व्यक्ति सामान्य दृष्टिबाट हेर्दा सफल मान्न सकिन्न। यस्ता व्यक्ति वृद्धावस्थामा गएर हृदयरोगबाट पीडित हुन्छन् र हृदयरोगबाटै यस्तो व्यक्तिको मृत्यु हुन्छ ।

हृदय रेखा

**चौथो प्रकारको हृदय रेखा :**

केही मानिसको हत्केलामा यो रेखा बुध पर्वतमुनिबाट निस्केर शनि पर्वतमुनि गएर समाप्त हुन्छ। यस्तो मानिसले कैयौं स्त्रीहरूसित प्रेम गर्दछ र सबैलाई धोका दिन्छ। यस्तो मानिसको जीवनमा छलकपट आदि बनिरहन्छ। वास्तवमा भन्ने हो भने यस्तो मानिसलाई पूर्णरूपमा विश्वास गर्न सकिन्न ।

यस्तो मानिसको प्रेम सात्त्विक प्रेम नभएर वासना पूर्तिको एउटा साधन हुन्छ। यस्तो मानिसको मनमा स्वार्थ रहन्छ र अरूलाई धोका दिनमा यस्ता मानिस कुशल हुन्छन्। मानिसहरूले यस्तो व्यक्तिलाई पहिलोपटक विश्वास गरे पनि पछि घृणा गर्न लाग्दछन्। आफ्नो काम फत्ते भएपछि यस्तो मानिसले अरूहरूमा वास्ता गर्न छोड्छन्। समाजमा यस्तो मानिसलाई कुनै पनि प्रकारको आदर-सम्मान प्राप्त हुँदैन । यस्तो मानिस निर्दयी, डाँका तथा अत्याचारी पनि हुन सक्छन्।

**पाँचौं प्रकारको हृदय रेखा :**

जसको हत्केलामा यस प्रकारको हृदय रेखा देखिन्छ त्यो मानिस एक किसिमले आत्मकेन्द्रित हुन्छन् र जीवनमा आफैमा हराएका हुन्छन्। तर यस्तो व्यक्ति आवश्यकताभन्दा

बढी परिश्रमी तथा आफ्नो लक्ष्यतिर बढ्ने हुन्छन् । कैयौँ प्रकारको प्रयत्नका बावजूद पनि यस्तो व्यक्तिलाई सफलता भने प्राप्त हुँदैन । जीवनको मध्यकालसम्म आउँदा नआउँदै यस्तो व्यक्तिले धैर्य गुमाउँछन् ।

तर पनि यस्तो व्यक्तिमा उर्वर मस्तिष्क हुन्छ तथा योजनाबद्ध रूपले कार्य प्रारम्भ पनि गर्दछन् । तर जति उत्साहका साथ कार्य प्रारम्भ हुन्छ, बीचमा आएर यस्तो व्यक्तिको जोश र उत्साह सेलाउन जान्छ । यस्तो व्यक्ति जीवनमा असफल भएपछि चिडचिडे स्वभावको हुन जान्छन्। यस्तो व्यक्तिको प्रकृति पनि शंकालु हुन जान्छ । यस्तो व्यक्तिको सम्पर्कमा जो आउँछन्, उनीहरूप्रति शंका गर्ने यस्तो व्यक्तिको स्वभाव हुन्छ । बिस्तारै बिस्तारै आफ्ना मित्र तथा परिचितहरूसँग यस्तो व्यक्तिको सम्बन्ध टुट्छ र यस्तो व्यक्तिमा निराशाको भावना आवश्यकताभन्दा बढी व्याप्त हुन जान्छ । पछि गएर यस्तो व्यक्ति आफूलाई बेसहारा र पराश्रय अनुभव गर्दछन् ।

हृदय रेखासँग सम्बन्धित निम्न तथ्यहरूबाट यससँग सम्बन्धित फलाफल ज्ञात हुन्छ–

१. हृदय रेखा जुन पर्वतमुनिसम्म पुगेको हुन्छ त्यस पर्वतसँग सम्बन्धित विशेष गुण उसमा स्वत: नै आउँछ । उदाहरणार्थ, यदि हृदय रेखा अनामिकाको मूलमा स्थित सूर्य पर्वतमुनि समाप्त हुन्छ भने सूर्यसँग सम्बन्धित विशेष गुणहरू प्रसिद्धि, कीर्ति, सम्मान आदिमा स्वत: नै वृद्धिको योग बन्न जान्छ ।

२. यदि हृदय रेखा मस्तिष्क रेखातिर झुकेको छ भने जतातिर त्यो मोडिएको छ, मस्तिष्क रेखाको त्यस बिन्दु समान आयुमा मस्तिष्कको पूर्ण विकास हुन्छ ।

३. यदि यो रेखा अगाडि गएर मस्तिष्क रेखासित पूर्णरूपमा मिल्छ भने उसले आफ्नो दिमागले केही नसोची अरूले भने अनुसार कार्य गर्छ र अरूको आदेशका लागि आफ्ना सबै कुरा सुम्पिदिन्छ ।

४. यदि हृदय रेखाले अगाडि गएर मस्तिष्क रेखालाई काट्छ भने दिमाग अस्तव्यस्तजस्तै हुन्छ र त्यस व्यक्तिमा निर्णय लिने पूर्ण क्षमता हुँदैन ।

५. यदि हृदय रेखामा आएर कुनै अन्य पातलो रेखा मिल्छ भने जुन पर्वतबाट त्यस पातलो रेखा आउँछ त्यस पर्वतको गुणहरूको उसको हृदयमा विशेष प्रभाव पर्छ ।

६. यदि हृदय रेखाबाट पातला स-साना रेखाहरू मस्तिष्क रेखातिर पढ्छ भने यस्तो व्यक्ति जीवनभरि मानसिक चिन्ताबाट पीडित रहन्छ ।

७. यदि हृदय रेखा कैयौँ ठाउँमा टुटेफुटेको छ भने व्यक्ति हृदय रोगको शिकार हुन्छ ।

८. यदि कसैको हत्केलामा हृदय रेखामा द्विपको चिह्न देखिन्छ भने उसले समाजमा विशेष सम्मान प्राप्त गर्न सक्दैन तथा उसको सामाजिक स्वरूप एक किसिमले खण्डित हुन्छ ।

९. हृदय रेखा जति अधिक लामो हुन्छ र वृहस्पति पर्वतसँग जति अधिक टाढा हुन्छ, त्यति नै धेरै श्रेष्ठ मानिन्छ ।

१०. यदि हृदय रेखा कतै टुटेको छ र फेरि प्रारम्भ भएको देखिन्छ भने जीवनमा त्यस भागमा व्यक्तिले मृत्युतुल्य कष्ट उठाउँछ ।

१. यदि हृदय रेखा लामो, स्पष्ट तथा सुन्दर छ भने त्यस व्यक्तिलाई प्रत्येक प्राणीबाट भरपूर प्रेम तथा स्नेह मिल्छ । क्रमश:

# षट्कर्माभ्यासः नौलिकर्म

षट्कर्माभ्यास भन्नाले हठशास्त्रमा वर्णित छ वटा यौगिक क्रिया भन्ने बुझिन्छ । ती अभ्यासहरू निम्न छन्–

१. नौलि २. धौति ३. बस्ति ४. नेति ५. कपालभाति ६. त्राटक ।

यी षट्कर्महरू विशेष गरी शरीरको आन्तरिक शुद्धिको लागि प्रयोग गरिन्छन् । यिनीहरू शरीरशोधक, उत्थापक र विचित्र गुणसंस्थापक छन् । यिनीहरूको मूल उद्देश्य कायशोधन हो ।

हठप्रदीपिकामा कुनै पनि साधकको शरीरमा मेद र श्लेष्मा धातुको अधिकता छ भने प्राणायाम अभ्यास गर्नु पूर्व षट्कर्मको अभ्यास गर्दा धेरै लाभ हुने उल्लेख गरिएको छ । वस्तुतः षट्कर्म दिनदिनै गर्न मनाही गरिएको छ । यसको अभ्यास कहिलेकाहीँ मात्रै गर्नुपर्दछ जसले गर्दा शरीरको आन्तरिक शुद्धि भइरहन्छ ।

यस अंकमा हामीले षट्कर्मको पहिलो अभ्यास नौलिक्रियाको बारेमा केही बताउन गइरहेका छौँ । आउँदा अंकहरूमा बाँकी क्रियाहरूका बारेमा वर्णन गर्ने नै छौँ ।

**गर्ने तरीका :**

१. सर्वप्रथम अनुकूल हुने लुगा लगाई उभिनुपर्दछ । दुईवटा खुट्टा एक-डेढ फिट फैलाएर राख्ने,

२. दुवै घुँडालाई अलिकति मोडेर गोलीगाँठालाई बाहिर घुमाएर राख्ने, हातहरूलाई जाँघमा राख्ने,

३. दुवै नाकबाट पूरा श्वास बाहिर निकाली घाँटीलाई अलि तल मोडेर औदरिक पेशी (पेटको मांसपेशी /Rectus abdominis) लाई शिथिल गर्नुपर्दछ र श्वासलाई भित्र जान नदिई श्वास भित्र लाने प्रयास गर्नुपर्दछ । यो नै उड्डियानबन्ध हो ।

४. अब उड्डियानबन्धसँगै प्युबिक (Pubic region) क्षेत्रमा दबाव दिनुपर्दछ । यसरी रेक्टस पेशी संकुचित हुन्छ । रेक्टस पेशीको ऐच्छिकरूपले संकुचन हुन्छ र संकुचित रेक्टस पेशीमा एक कठोर दण्ड बन्दछ । यो नै मध्यमा नौलि हो ।

५. केही दिनको मध्यमा नौलिको अभ्यासपछि वाम वा दक्षिण नौलिको अभ्यास गर्नुपर्दछ । यसमा दक्षिण वा वाम रेक्टस पेशीलाई एक-एक गरी अलग-अलग संकुचन गर्नुपर्दछ ।

६. मध्यमा नौलिको अभ्यासपछि पूर्णनौलिको अभ्यास गर्नुपर्दछ । यसमा नौलिदण्डलाई स्वतन्त्ररूपले उदरप्रदेशमा चलाउनुपर्दछ । अभ्यास दायाँबाट बायाँ, बायाँबाट दायाँ र चक्रवत् चलाउनुपर्दछ ।

७. यसरी औदरिक पेशी (Rectus abdominis) को ऐच्छिक संकुचनद्वारा प्राप्त काठिन्यले पेटभित्र रहेका कोष्ठाङ्गको मालिस गरिन्छ ।

नौलिक्रियाको अभ्यास सामान्यतः कुनै पनि स्वस्थ मानिसले गर्न सक्दछन् ।

**फाइदाः**

१. पेटभित्र रहेका अंगहरूको व्यायाम हुन्छ ।

२. पाचन प्रणालीमा सुधार आउँछ ।

३. प्रजनन संस्थानको क्रियामा लाभ पुर्‍याउँछ ।

४. मासिक धर्मसम्बन्धी विकास तथा जननाङ्गको दुर्बलता हटाउँछ ।

५. प्रायः सबै रोगमा हितकर हुन्छ ।

निम्न अवस्थाहरूमा यस क्रियाको अभ्यास गर्न निषेध छ–

१. चालीस वर्षको उमेरपछि नौलिकर्मको अभ्यास चिकित्सकको परामर्श लिएर गर्नुपर्दछ ।

२. आन्त्र क्षयबाट पीडित व्यक्ति

३.जीर्ण अपेण्डिसाइटिसबाट पीडित

४. अन्य शोधजन्य औदरिक व्याधिबाट पीडित

५. उच्च रक्तचापबाट पीडित

६. चौध वर्षभन्दा मुनि ।

जय गुरुदेव !

# खानै पर्ने फल

# अनार

बजारमा पाइने फलहरुमध्ये सायदै त्यस्तो व्यक्ति होला जसलाई अनारको दानाले नलोभ्याएको होस् । हेर्दा मुख रसाउने यस फलका दानाहरु देख्दा मात्र सुन्दर नभएर अत्यन्तै उपयोगी पनि छन् । आयुर्वेद शास्त्रमा त यसको आफ्नै विशिष्ट वर्णन गरिएको पाइन्छ। स्वास्थ्यका दृष्टिले अनार निकै महत्त्वपूर्ण फल हो। आयुर्वेद शास्त्रमा यसको वर्णन यसरी गरिएको पाइन्छ–

भावप्रकाश निघण्टु–

**दाडिमः करको दन्तबीजो लोहितपुष्पकः ।**
**तत्फलं त्रिविधं स्वादु स्वादुम्लं केवलाम्लकम् ॥**
**तत्तु स्वादु त्रिदोषहतं तृड्दाहज्वरनाशनम् ।**
**हृत्कण्ठमुखरोगघ्नं तर्पणं शुक्रलं लघु ॥१०३॥**
**कषयानुरसं ग्राहि स्निग्धं मेधानलावहम् ।**
**स्वादम्लं दीपनं रूच्यं किञ्चित्पित्तकरं लघु ॥१०४॥**
**अम्लं तु पित्तजनकमामवातकफापहम् ।** (भावप्रकाश)

अनारलाई संस्कृतमा दाडिम, करक, दन्तबीज तथा लोहितपुष्पक आदि नामले चिनिन्छ। अनारको फल स्वादअनुसार तीन प्रकारका हुन्छन्– १) मघुर रसयुक्त २) मधुर र अम्ल रसयुक्त ३) अम्ल रसयुक्त ।

**१) मधुर मिठो अनार** : आरम्भमा मिठो हुन्छ र अन्तमा कषाय रसयुक्त हुन्छ । यो विशेषतः सन्तर्पण (तौल बढाउने), शुक्रजनक, लघु, गाह्री, स्निग्ध, स्मृति तथा बलवर्धक एवं त्रिदोष, तृष्णा, दाह, ज्वर, हृदय तथा घाँटीसम्बन्धी रोगमा उपयोगी हुनुको साथै मुखको दुर्गन्ध हटाउने हुन्छ ।

**२) मधुर र अम्ल रसयुक्त अनार** : यो अग्निदीपक, रुचिजनक, लघु तथा केही मात्रामा पित्तकारक हुन्छ ।

**एक वर्षसम्म अनार सेवनपछि आर्टेरियोस्क्लेरोसिस वा धमनीसम्बन्धी रोगीको गलाको धमनीको मोटाइ ३०% सम्म घट्यो। यस्तै, उच्च रक्तचाप २१% ले तल आयो र हृदय नजिकको धमनीमा तनाबजन्य कठोरताले गर्दा कम हुन गएको प्रवाहमा ३ महिनामै १७% सम्म सुधार देखियो।**

३) **अमिलो** : यो अम्ल रसयुक्त, पित्तजनक, आम बात तथा कफनाशक हुन्छ ।

**अम्ल कषायमधरं वातध्नं ग्राहि दीपनम् ।**
**स्निग्धोष्णं दाडिमं हृघं कफपित्ताविरोध च ॥**

अनार रसमा अम्ल, कषाय मधुर हुन्छ भने वातहर एवं दीपन कार्य गर्छ । स्निग्ध र ऊष्ण अनार हृदयको लागि लाभदायक छ भने कफ र पित्तको शमन गर्छ ।

रुक्ष र अम्ल रस भएको अनार पित्त शमनमा उत्तम मानिन्छ ।

**कषयानुरसं तेषां दाडिमं नातिपित्तलम् ।**
**दीपनयिं रूचिकरं हृद्यं वर्चोविबन्धनम् ॥**
**द्विविधं ततु विज्ञेयं मधुरं चामलमेन च ।**
**त्रिदोषघ्नं तु मधुरमम्लं वातकफापहम् ॥**

(सु.सु. ४६)

कषाय अनुरस भएको अनार अति पित्तकारक हुँदैन भने यो दीपनीय, रुचिकारक, हृद्य, मललाई बाँध्ने काम गर्छ। अनारका दुई प्रकार पाइन्छन्– मधुर र अम्ल, मधुर त्रिदोषहर हुन्छ भने अम्ल, वात, कफ शमन गर्छ भनी सुश्रुत संहितामा वर्णन गरिएको छ ।

हृद्य (हृदयलाई राम्रो गर्ने), छर्दी निग्रहण, परन्दकादि गणमा पर्ने अनार Punicaceae कुलअन्तर्गत पर्ने फल हो। यसको वैज्ञानिक नाम <u>*Punica granatum*</u> हो भने यसलाई संस्कृतमा दाडिम, दन्तबीज (दाँतजस्तै बीज भएको हुनाले), लोहित पुष्पक (रातो फूल भएको) आदि नामले चिनिन्छ भने अंग्रेजीमा यसलाई Pomegrnate भनिन्छ । यसको बोट मध्यम आकारको १०-१५ फिट अग्लो हुन्छ । फूल रातो वर्णको र कहिलेकाहीँ पहेँलो हुन्छ भने फल गोलाकार करिव २ इञ्च व्यास स्थायी बाह्य कोषयुक्त, फलत्वक् चर्मवत् काष्ठिय र फलको भित्री भाग अनेकौं पर्दामा विभक्त अनेकौं कोणीय बीज हुन्छन्। जसको आवरण माङसल, रातो वर्ण, गुलाबी या श्वेत हुन्छ। पुष्प अप्रिल, मेमा फुल्छ भने फल जुलाई, सेप्टेम्बरमा फल्छ । रसअनुसार यसका तीन जाति मानिएका छन् ।

### रसायनिक संगठन–

आर्द्रता-७८%, प्रोटिन-१.६%, वसा-०.१%, सूत्र-५.१%, कार्बोहाइड्रेट-१४.५%, खनिज-०.७%, क्याल्सियम-१०%, म्याग्नेसियम-१२%, अग्जालिक एसिड-१४%

यसमा फसफोरस, आइरन, सोडियम, पोटासियम, कपर, सल्फर, गन्धक, क्लोरिन, थायामिन, राइबोफ्लाभिन, निकोटिनीक एसिड, भिटामीन सी । साथै बोक्रामा Pelletierin, iso- pelletierin आदि क्षार पाइन्छन् ।

**गुण** :

अनारमा विशेषतः लघु, स्निग्ध गुण, मधुर, कषाय, अम्ल रस हुनुको साथै विपाक मधुर (मधुर जातिमा), अम्ल (अम्ल जातिमा) पाइन्छ भने अनुष्ण वीर्य रहेको हुन्छ ।

**प्रयोज्य अंगः-**

अनारको मुख्य त फल, फलत्वक्, मूलत्वक् प्रयोग गरिन्छन् । मधुर फलको प्रयोग त्रिदोष विकारमा तथा मधुर अम्ल तथा अम्ल फलका प्रयोग कफवात विकारमा गरिन्छ ।

**बजारमा पाइने औषधिहरू–**

दाडिमावटक, दाडिमादि चूर्ण, दाडिमादि वटी, दाडिम पाक वटी, दाडिमाद्य घृत, दाडिमाद्य तेल ।

**अनार र यसको औषधीय उपयोगितासम्बन्धी अनुसन्धानहरू–**

१. स्वास्थ्यवर्धक गुणको कारण यो हरेक रोगमा प्रयोग गरिन्छ ।

२. यसको नियमित सेवनले बूढो हुने प्रक्रिया पर सर्ने विश्वास गरिन्छ ।

३. अनारमा रक्तसंचारसम्बन्धी रोगसँग जुध्ने क्षमता हुन्छ । यसले रक्तचाप घटाउँछ ।

४.सुन्निएको वा पोलेको अङ्गलाई बिसेक गर्छ ।

५. वात रोगको सम्भावना कम गर्छ ।

६. क्यान्सर रोकथाममा पनि यो फल सहयोगी मानिन्छ ।

७. यसले महिलामा मातृत्वको सम्भावना र पुरुषमा पुरुषत्व बढाउँछ ।

८. यो गुणकारी फलको २ सयभन्दा बढी अनुसन्धान भएका छन् ।

इजरायलस्थित हाइफल विश्वविद्यालयका प्रोफेसर एफ्राइम लास्कीले यस फलमा पाइने उपयोगी तत्वले शरीरको रोग प्रतिरोधी प्रणालीको रक्षा गर्छ भनेर प्रमाणित गरेका छन्। उक्त अध्ययनअनुसार यसमा पाइने भिटामिन, खनिज तत्त्व र एन्टी अक्सीडेन्टले रुघाखोकी, फ्लुमा प्रत्यक्ष अनुभव गर्न सकिने खालको आराम पुऱ्याउँछ ।

९. अनारमा प्रचुर मात्रामा लाभदायक प्रोटिन, कार्बोहाइड्रेट, फाइबर, भिटामिन र खनिज पदार्थ पाइन्छन् । १ सय ग्राम अनार खाँदा हाम्रो शरीरलाई करिव ६५ किलो क्यालोरी ऊर्जा प्राप्त हुन्छ ।

१०. अनारले छाला, स्तन र प्रोस्टेट ग्रन्थीको क्यान्सर तथा पेटको अल्सरको सम्भावनामा समेत कमी ल्याउँछ ।

११. अमेरिकी चिकित्सकहरुले उल्लेख गरे अनुसार यसको रसको सेवनले वृद्धावस्थामा हुने रोग अल्जाइमरको जोखिम समेत कम गर्छ ।

१२. प्रयोगहरुमा एक वर्षसम्म अनार सेवनपछि आर्टेरियोस्क्लेरोसिस वा धमनीसम्बन्धी रोगीको गलाको धमनीको मोटाइ ३०% सम्म घट्यो । यस्तै, उच्च रक्तचाप २१% ले तल आयो र हृदय नजिकको धमनीमा तनावजन्य कठोरताले गर्दा कम हुन गएको प्रवाहमा ३ महिनामै १७% सम्म सुधार देखियो ।

१३. वैज्ञानिकहरुले अनारमा रेड वाइन वा हरियो चियाको तुलनामा ३-४ गुणा बढी पालिफेलोनजस्तो एन्टिअक्सिडेन्ट पाएका छन् जसले फ्रि रेडिकल्सलाई बाँध्ने काम गर्छ । जय गुरुदेव !

# प्रकृति नै नृत्यमय भएको अवसर
# सातौँ रोट महोत्सव

'गुरु र शिष्यको सम्बन्ध संसारको सबैभन्दा उत्कृष्ट सम्बन्ध हो'- यस दिव्य वाणीले भने झैं वास्तवमा नै गुरु-शिष्यजस्तो निकट र सुन्दर सम्बन्ध अरु कुनै हुन सक्दैन। विभिन्न संसारीक प्रपंचमा परेर यस कुरालाई भुल्ने गरेको मानिसमा जब यो सत्य बोध हुन्छ, जब शिष्यहरुभित्र आफ्ना गुरुदेवप्रतिको भावभक्ति उर्लेर आउँछ तब गुरुदेव पनि बाध्य हुनुहुन्छ शिष्यहरुप्रति आफ्नो कृपा, करुणा बर्साउनका लागि। गुरु र शिष्यको यस्तो मिलनमा त मानिसहरु मात्र होइन, प्रकृति पनि खुशी हुनेरहिछन्, नृत्य गर्दिरहिछन्। यी सबै कुराको आभाष सातौं रोट महोत्सवमा भयो।

सिद्धाश्रम शक्ति केन्द्र नेपालले गत जेठ १३ गतेदेखि जेठ २३ गतेसम्म आयोजना गरेको गोरक्ष प्रकट दिवस तथा सातौं रोट महोत्सव कार्यक्रम भव्य एवं दिव्यरुपमा सम्पन्न भएको छ। सातौं भएकोले यस महोत्सव विशेष महत्त्वपूर्ण थियो। एघार दिनसम्म कार्यक्रम जसरी सम्पन्न भयो, कार्यक्रम अवधिभर गुरु सेवक/सेविकाहरु जसरी कार्यक्रममा खट्नुभयो, कार्यक्रम अवधिभर जस्तो किसिमको वातावरण रह्यो र प्रकृतिमा जस्तो हलचल देखियो ती सबै कुराहरुले यस महोत्सवलाई ऐतिहासिकरुपमा सफल बनाएका छन्। समग्रमा कार्यक्रम निम्नानुसार रहेको थियो-

**जेठ १३ गते**

बिहान ७ बजे गोरखा बसपार्कमा रहेको सम्पर्क कार्यालयबाट भव्य शोभायात्राको शुभारम्भ भयो। हजारौं भक्तजनहरुको सहभागिता रहेको सो शोभायात्रा तल्लो दरबार, सतीपीपल हुँदै गणेश स्थानको परिक्रमा गरी गोरख गुफा पुगेको थियो। उक्त शोभा यात्रा गुरुदेवहरुको जयकार गर्दै, विभिन्न सांस्कृतिक झाँकीहरु प्रदर्शन गर्दै, बाजागाजासहित, भजनकीर्तन र नृत्यमय हुंदै अगाडि बढेको थियो। बाटोमा स्थानीयबासीहरुका तर्फबाट आ-आफ्नो घरको अगाडि कलश राखेर शोभायात्राको भव्य स्वागत गरिएको थियो भने घरका छतबाट, बरण्डाबाट, बार्दलीबाट स्वागतार्थ आत्मीयरुपमा अर्पण गरिएका पानी, अबीर, लावाहरूले सहभागीहरूलाई जेठको प्रचण्ड गर्मीमा शीतलता दिइरहेको थियो।

गोरख गुफा पुगिसकेपछि विशेष पूजन, ज्योत पूजन, झण्डोत्तोलनको कार्यक्रम रहेको थियो भने अर्कोतर्फ शमीको चौतारामा भक्तजनहरु भजनकीर्तनमा रमिरहनुभएको थियो। रोट पकाउने कार्य पनि सोही दिनबाट शुभारम्भ भएको थियो। उक्त दिन स्थानीय देवीदेवताको पूजन, विशेष गुरु पादुका पूजन, रोट अर्पण, गुरु आरतीलगायतका क्रमहरु सम्पन्न भएका थिए भने साँझ कार्यकर्ता भेला एवं समीक्षा तथा दीपावलीको क्रम रहेको थियो।

**जेठ १४ देखि २२ गतेसम्म**

बिहान ६ बजेदेखि रोट पकाउने कार्य शुरु, ७ देखि ८ बजेसम्म निखिल स्तवन, गोरक्ष स्तवन पाठ, ८ देखि ९ बजेसम्म मन्त्र जप, ९ देखि १० बजेसम्म विशेष हवन, १२ बजेबाट शमीको चौतारामा भजनकीर्तन शुरु, २ बजे विशेष गुरु पादुका पूजन, ३ बजेपछि नाथ परम्पराबाट नित्य पूजन एवं रोट अर्पण, साँझ ५ बजे गुरु आरती, ६ बजे कार्यकर्ता

भेला एवं समीक्षा तथा दीपावलीका कार्यक्रमहरु सम्पन्न भएका थिए।

कार्यक्रम अवधिभरि गोरख गुफा वरिपरि रहेका विभिन्न देवीदेवताहरूको पूजन सम्पन्न भएको थियो। गुरु पादुका पूजनपश्चात् प्रत्येक दिन लक्ष्यदीप प्रज्ज्वलनको क्रम पनि रहेको थियो। विभिन्न व्यक्ति तथा सम्पर्क कार्यालयहरुको तर्फबाट ३० लाख भन्दा बढीको लक्ष्य दीप अर्पण गरिएको थियो।

रोट अर्पणको समयमा घण्टी, डमरु, नाद, पञ्चेबाजा बजाएर रोट अर्पण भएको थियो। तारिएको (ताई) र सेकिएको (भुङ्ग्रे) रोट गरी दिनहुँ हजारौंको सङ्ख्यामा रोट अर्पण भएको थियो।

कार्यक्रम अवधिभरि भान्छामा नेपाली सेनाका जवानहरु र पानीको व्यवस्थापनमा नेपाल प्रहरीका जवानहरुले पनि अहं भूमिका निभाउनुभएको थियो।

बसोबासका लागि यसपालि दरबारको उत्तरतर्फ आश्रमको निर्माणाधीन भवन तथा त्यसको केही तल निर्माणाधीन रिसोर्टमा व्यवस्था गरिएको थियो। आश्रम भवन नजिकै गत वर्षहरुमा झैं भक्तजन एवं साधक साधिकाहरूका लागि भोजनको व्यवस्था गरिएको थियो।

**महोत्सवमा प्रशिक्षण तथा तालिम**

सिद्धाश्रम शक्ति केन्द्रले आफ्ना कार्यकर्ताहरुलाई दिंदै आइरहेको मासिक प्रशिक्षण तथा तालिम कार्यक्रमअन्तर्गत यसपालि उपनेतृत्वकर्ताहरुको १३ औं तालिम सम्पन्न भयो। सद्गुरुदेवहरुको स्तुतिवन्दना प्रार्थनाबाट शुरु भएको कार्यक्रममा गुरु पूजन स्तुति वन्दना, सद्गुरुदेवसम्बन्धी स्तोत्रहरुको पाठ तथा विभिन्न विषयवस्तुहरुको प्रशिक्षण दिने क्रम रहेको थियो। कार्यक्रममा संस्थागत अन्तर्क्रिया पनि सम्पन्न भएको थियो। जेठ २० र २१ गते सम्पन्न उक्त तालिम कार्यक्रम बिहान ६.३० देखि ११ बजेसम्म संचालन भएको थियो। तालिम कार्यक्रम हेलिप्याडनिरको आश्रमको निर्माणाधीन भवनमा भएको थियो।

त्यस्तै, रोट महोत्सवमा निःशुल्क प्राथमिक उपचारको व्यवस्था गरिएको थियो। प्राथमिक उपचारअन्तर्गत आयुर्वेदिक र आधुनिक एलोप्याथिक औषधिहरू आवश्यकता हेरेर वितरण गरिएको थियो।

**जेठ २३ गते समापन समारोह**

महोत्सवको समापनको दिनमा विदाइ समारोह सम्पन्न भएको थियो। उक्त समारोहमा नाथयोगीहरुलगायत रोट महोत्सवमा प्रत्यक्ष अप्रत्यक्षरुपमा खट्नेहरुलाई पत्रम् पुष्पम् उपहार प्रदान गरिएको थियो।

समारोहमा गोरखाका साधक किशोरकुमार अकेला, श्री प्रदीपनाथ योगी, सावरपन्थी रामजी अर्यालज्यूले बोल्नुभएको थियो। सातौं रोट महोत्सवका संयोजक एवं गोरखा जिल्लाका प्रमुख जिल्ला अधिकारीज्यूले पनि उक्त अवसरमा आफ्नो भनाइ राख्नुभएको थियो भने सिद्धाश्रम शक्ति केन्द्र नेपालको तर्फबाट सावरपन्थी रामजी अर्यालज्यूले कार्यक्रम सफल बनाउन योगदान दिने सबैमा धन्यवाद ज्ञापन गर्नुभएको थियो।

रोट महोत्सवमा यसपटक २ लाखको हाराहारीमा रोट अर्पण गरिएको थियो।

समग्रमा भन्नु पर्दा कार्यक्रम पहिलेको जस्तै रहे पनि कार्यक्रम जुन रुपमा सम्पन्न भयो त्यो शैली निकै पृथक देखिन्थ्यो। सातौं रोट महोत्सवको सबैभन्दा ठूलो विशेषता यो रह्यो कि सम्पूर्ण कार्यक्रम स्वस्फूर्तरुपमा सम्पन्न भयो। कतै कुनै बाध्यता छैन, कुनै गुनासो छैन, कुनै तनाव छैन, सबैतिर स्फूर्ति र उल्लास मात्र छ। कार्यक्रम अवधिभर यस्तो महसुस भइरह्यो कि कार्यक्रमको सम्पूर्ण व्यवस्थापन स्वयं गुरुदेवहरुद्वारा संचालित

छ, सबै कार्य स्वत: भइरहे जस्तो भयो, त्यति ठूलो कार्यक्रमको भार कसैलाई आभाष नै भएन ।

कार्यक्रमको अर्को उल्लेखनीय पक्ष गुरुसेवक/सेविका र भक्तजनहरुको भावभक्ति रह्यो । सबै गुरुप्रेममा ओतप्रोत, सबैको एउटै लक्ष्य कार्यक्रमलाई सफल बनाउनु र आफ्ना परमप्रिय गुरुदेवलाई खुशी बनाउनु देखिन्थ्यो । यस महोत्सवका शुरुका दिनहरुमा आउने जाने भक्तजनहरुको संख्यामा केही कमी देखिएता पनि पछिल्ला दिनहरुमा त्यो बढेको थियो । गोरख गुफा र गोरखकाली मन्दिरमा कार्यरत पूजारीहरुका अनुसार जेठ २२ गते अष्टमीको दिनमा गोरखगुफा परिसरमा अहिलेसम्मकै सबैभन्दा बढी मानिसहरुको भीड रहेको थियो ।

सातौं रोट महोत्सवको सबैभन्दा महत्वपूर्ण पक्ष यो रह्यो कि महोत्सवमा सबै दिनहरुमा गुरु पादुका पूजनपश्चात् र रोट अर्पणपश्चात् पानी वर्षियो । घाम लागिरहेको छ, तर पनि पानीका थोपाहरु वर्षिरहेछन्- अभिषेक भए जसरी । कहिले घाम लाग्दालाग्दै पानी पर्‍यो भने कहिले कुहिरोले ढाकिएर पानी पर्‍यो । पानी जसरी वर्षियो त्यसबाट गुरुदेवको सामीप्यता र उहाँको कृपाको आभाष धेरैलाई भयो । साँझको कार्यकर्ता कार्यक्रममा जब सबै गुरु प्रेममा निमग्न भएर नृत्यमय हुन्थे त्यतिखेर वरिपरिका रुखका पातहरु र सजावटका लागि टाँगिएका ध्वजापताकाहरुमा पनि सर्सराहट हुन्थ्यो र कहिले शमीको चौतारी नै कुहिरोले ढाकिन्थ्यो । त्यतिखेर यस्तो लाग्दथ्यो कि गुरु र शिष्यको त्यो दिव्य मिलनमा प्रकृति पनि खुशीले गदगद भएर नृत्य गरिरहेकी छिन्, गुरु शिष्य मिलनको गाथा सुनाइरहेकी छिन् ।

जय गुरुदेव !

# विद्याश्रम गतिविधि

गोरक्ष प्रकट दिवस तथा सातौं रोट महोत्सवको पहिलो दिनको र्‍यालीमा

गोरखा दरबार परिसरमा विद्यार्थीहरू सामूहिक तस्बिर खिचाउँदै

प्रशिक्षण प्रदान गर्दै प्रशिक्षक ट्राफिक प्रहरी

प्रशिक्षक ट्राफिकप्रहरीद्वयका साथमा विद्याश्रमका विदेशी भाषा शिक्षक

## गोरखा गाँउ रमाइलो ठाउँ

हरेक वर्षझैं यस वर्ष पनि विद्याश्रमको अतिरिक्त कार्यक्रमअन्तर्गत कक्षा ५ देखि १० सम्मका विद्यार्थी तथा स्कूलका स्टाफहरूद्वारा मिति २०६७/०२/१२ देखि १४ गतेसम्म गोरखा भ्रमण कार्यक्रम ज्यादै उल्लासमय वातावरणमा गरियो । विशेष अवसरको रूपमा शिक्षकद्वारा गुरू गोरखनाथ अवतरण हुनुभएको गोरख गुफामा सवा लाख रोट अर्पण गर्ने महापर्वमा विद्यार्थीहरू सहभागी हुन पाउँदा ज्यादै खुशी देखिन्थे । गोरखा नेपाल र नेपालीको इतिहासमा महत्त्वपूर्ण स्थान ओगटेको र पाठ्यपुस्तकमा पनि गोरखाको बारेमा विभिन्न घटना, व्यक्तित्वको बारेमा अध्ययन मात्र गरेका विद्यार्थीहरू त्यहाँ गएर आफूले अवलोकन गर्ने सु-अवसर प्राप्त गरेका थिए । गोरखादरवार, गोरखगुफा, रामशाह चौतारी, बगैँचालगायत अन्य महत्त्वपूर्ण स्थानको अवलोकन गरी मिति १४ गते काठमाडौं फर्केका थिए ।

## ट्राफिक तालिम

गो.नि. विद्याश्रममा अध्ययनरत विद्यार्थीहरूलाई विभिन्न कुराको व्यावहारिक ज्ञान दिँदै जाने उद्देश्यलाई मनन गर्दै गत महिनामा कक्षा ९ र १० का विद्यार्थीहरूलाई ट्राफिक प्रहरीको सेवा, हाम्रो कर्तव्य तथा सुरक्षाजस्ता विभिन्न पक्षको बारेमा ट्राफिक प्रहरीका कमानसिंह खड्का र हरिश्चन्द्र पौडेलबाट विशेष प्रशिक्षण कार्य सम्पन्न भयो । विद्याश्रमका शिक्षक, विद्यार्थीहरू मात्र नभई यातायात क्षेत्रसँग सम्बन्धित स्टाफहरूले पनि उक्त अवसरमा लाभ लिनुभएको थियो । विशेष कार्यक्रमअन्तर्गत उक्त प्रशिक्षण लगभग २ घण्टा चलेको थियो भने प्रशिक्षक कमानसिंह खड्काज्यूले बडो रमाइलो शैलीमा प्रस्तुत गर्दा विद्यार्थीले रमाई-रमाई विभिन्न विषयवस्तुको ज्ञान प्राप्त गर्न सफल हुनुभएको थियो । नेपालमा ट्राफिक व्यवस्था, यसको कार्य-कर्तव्य र कुनै पनि सवारी दुर्घटनाका कारण तथा त्यसबाट बच्न सक्ने तरीकाको प्रयोगात्मक कक्षा पनि सञ्चालन भएको थियो भने सोही कार्यक्रममा स्कूलका विद्यार्थीहरूद्वारा ट्राफिकसम्बन्धी विषयवस्तुमा तयार परिएको नाटक पनि प्रस्तुत गरिएको थियो ।

## हवन कार्यक्रम

सिद्धाश्रम शक्ति केन्द्रका मासिक हवन कार्यक्रमअन्तर्गत हरेक महिना सञ्चालन हुँदै आइरहेका हवन कार्यक्रमहरु गत महिना निम्नानुसार सम्पन्न भए ।

### केन्द्रीयरूपमा सम्पन्न

ज्येष्ठ ३ गते सोमबार– श्री शिव गोरक्ष हवन, गोरखनाथ मन्दिर, पशुपति, मृगस्थली, समय बिहान ८:००–९:०० । ज्येष्ठ ४ गते मंगलबार– तान्त्रोक्त वटुक भैरव हवन, वटुक भैरव मन्दिर, लगनखेल, समय बिहान ७:००–८:०० । ज्येष्ठ ५ गते वुधबार– तान्त्रोक्त महालक्ष्मी हवन, महालक्ष्मी मन्दिर, लगनखेल, समय बिहान ८:००–९:०० । ज्येष्ठ ६ गते बिहीबार– तान्त्रोक्त वगलामुखी हवन, वगलामुखी मन्दिर, पाटन, समय बिहान ८:००–९:०० ।

### सम्पर्क कार्यालयहरूमा सम्पन्न

ज्येष्ठ ५ गते वुधबार– तान्त्रोक्त विन्ध्यवासिनी हवन, विन्ध्यवासिनी मन्दिर, पोखरा, कास्की, समय बिहान ८:००–९:०० । ज्येष्ठ ७ गते बिहीबार– तान्त्रोक्त वेदव्यास हवन, वेदव्यास गुफा, तनहुँ, समय बिहान ८:००–९:०० । ज्येष्ठ ४ गते मंगलबार– तान्त्रोक्त गणपति हवन, सूर्यविनायक, भक्तपुर, समय बिहान ७:००–८:०० । ज्येष्ठ २ गते मंगलबार– तान्त्रोक्त चण्डेश्वरी हवन, चण्डेश्वरी मन्दिर, काभ्रे, समय बिहान ७:००–८:०० ।

## दिव्य गुरू महोत्सव

परमपूज्य सद्गुरूदेव डा. नारायणदत्त श्रीमालीज्यू (परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज) को अवतरण भएको शुभ २१ तारीखको पावन अवसर पारेर सिद्धाश्रम शक्ति केन्द्रले प्रत्येक महिना दिव्य गुरू महोत्सवको आयोजना आफ्नो स्थापना कालदेखि नै गर्दै आइरहेको छ । यसैक्रमलाई भव्य एवं दिव्यरूपमा निरन्तरता दिने क्रममा गत ज्येष्ठ महिनाको ७ गते तदनुसार २१ मे २०१० का दिन जैन भवन कमलपोखरीमा उक्त कार्यक्रम सम्पन्न भयो ।

कार्यक्रम बिहान १०:१५ मा प्रार्थनाबाट शुभारम्भ भएको थियो । प्रार्थनापछि निखिल स्तवन, गोरक्ष स्तवनको सामूहिक सस्वर पाठ गरिएको थियो । त्यसपछि गुरू पादुका पूजन, गुरूमन्त्र जप, हवन, आह्वान भजन, आरतीको क्रम रहेका थियो । कार्यक्रममा गुरू पूजनको सौभाग्य साधक प्रभुसुन्दर श्रेष्ठ र साधिका जुलुम श्रेष्ठले प्राप्त गर्नुभएको थियो । आरतीपछि स्वागत, भजन कीर्तन, नृत्य, प्रवचन आदि क्रमहरू रहेका थिए । कार्यक्रममा उपस्थित सम्पूर्णलाई मन्तव्यको माध्यमबाट साधिका शकुन्तला तिमिल्सिनाले स्वागत गर्नुभएको थियो । प्रवचनको क्रममा सावरपन्थी सदस्य साधक रामजी अर्यालले बोल्नुभएको थियो । दिव्य गुरू महोत्सव कार्यक्रमबारे प्रष्ट्याउँदै उहाँले भन्नुभयो– 'दिव्य गुरू महोत्सव सद्गुरूदेवले हामी शिष्यहरूको हित र कल्याणका लागि कृपा र आशीर्वाद प्रदान गर्ने एउटा बहाना हो । हाम्रो लक्ष्य गुरू प्राप्ति, मोक्ष प्राप्ति हुनुपर्दछ । हामी गुरूमुखी हुनुपर्छ, व्यक्तिमुखी हुने, व्यक्तिको पछि लाग्ने गलत प्रवृत्ति त्याग्नुपर्छ ।'

अपराह्न ३:३० बजे कार्यक्रमको औपचारिक समापनपछि एकातर्फ प्रसाद वितरणको क्रम थियो भने कार्यक्रम हलमा निकै समयसम्म भजनकीर्तनको रौनकता छाएको थियो । कार्यक्रम सञ्चालन सावर मातृका साधिका विन्देश्वरी बरालले गर्नुभएको थियो ।

## विविध कार्यक्रमहरू

**क्षेत्रपुर (चितवन)**– गत जेठ २ गते अक्षय तृतीयाको दिनमा चितवन जिल्लाको क्षेत्रपुरमा रहेको सम्पर्क कार्यालयमा सातु र सर्वत वितरण भयो । उक्त दिन सिद्धाश्रम शक्ति केन्द्रका नेपालभित्र रहेका अन्य सम्पर्क कार्यालयहरूमा पनि सो कार्यक्रम सम्पन्न भएको थियो ।

**गौरीगञ्ज (चितवन)**– गत महिनामा नै चितवनको गीतानगर–६, पारसनगरमा रहेको हरिहर मन्दिर परिसरमा भजनकीर्तन कार्यक्रमका आयोजना गरिएको थियो ।

समय गतिशील छ। समय चक्र घुम्ने क्रममा कहिले राम्रो समय आउँछ त कहिले नराम्रो। नराम्रो समयमा अध्यात्मप्रति अनास्था र भौतिकतालाई नै सर्वोस्व ठानी त्यसको लागि हरेक अनैतिक अमानवीय कार्य गर्ने प्रवृत्तिको वर्चस्व हुने गर्दछ। ठीक यही समय अहिले हाम्रो सामु छ।

अध्यात्म र भौतिकता मानव जीवनमा दुई अत्यावश्यक पाटाहरु हुन् जसको सन्तुलनमा मानव जीवन पूर्ण बन्दछ। तर जब यो सन्तुलन बिग्रन्छ जीवन दुःख, कष्टले अशान्त बन्दछ। यस्तो समयमा नै छल, झूट, अत्याचारको बिगबिगी भएर सम्पूर्ण मानव समुदाय नै मर्माहत हुन्छ र धर्तीमाता नै सन्तापको अग्निमा जल्न थाल्दछिन्।

यस्तो स्थितिमा पुनः सन्तुलन अत्यावश्यक बन्दछ। धर्तिमा विद्यमान छल, कपट र दानवीय प्रवृत्तिहरुको अन्त भई पुनः शान्ति र अध्यात्म स्थापित हुन आवश्यक बन्दछ। कालखण्डको यो कडीमा दानवीय प्रवृत्तिहरुको वर्चस्व र अध्यात्मविमुखताको पराकाष्टाले पुनः परम तत्त्वको अवतरणलाई बाध्य बनायो जसको फलस्वरुप परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजलाई धर्तीबासीले डा. नाराणदत्त श्रीमाली स्वरुपमा युगपुरुषको रुपमा पाए।

धर्तीमा युगपुरुषको अवतरणको सन्दर्भमा पच्चीस सय वर्षको समय महत्त्वपूर्ण रहेको छ। भगवान् रामको अवतरणको पच्चीस सय वर्षपछि भगवान् श्रीकृष्णको अवतरण भएको छ र उहाँको अवतरणको पच्चीस सय वर्षपछि भगवान् गौतम बुद्धको अवतरण भएको छ। त्यस्तै भगवान् बुद्धको अवतरणको पच्चीस सय वर्षपछि सद्गुरुदेव डा. नारायणदत्त श्रीमालीको अवतरण भएको छ।

अहिलेको समय, कलिकालको यो समय अति नै जटिल र कष्टप्रद छ त्रेतायुगभन्दा धेरै, द्वापरयुगभन्दा धेरै। त्यसैले होला दिव्यात्माको अहिलेको अवतरण पनि सशक्तताका साथ भएको छ। भ गवान् श्रीराम बाह्र कलाले युक्त हुनुहुन्थ्यो, भगवान् श्रीकृष्ण सोह्र कलाले युक्त हुनुहुन्थ्यो भने सद्गुरुदेब चौँसठ्ठी कलाले युक्त हुनुहुन्थ्यो।

युगको परम सौभाग्यस्वरुप, युगको कल्याणार्थ अवतरित हुने युगपुरुषहरुलाई नचिन्नु, उहाँहरुलाई विभिन्न लांछना लगाउनु, उपहास गर्नु त युगको नियति नै भएको छ। यही कुरा रामको पालामा भयो। यही कुरा कृष्णको पालामा भयो, यही कुरा बुद्धको पालामा भयो र वर्तमान समयमा फेरि त्यही इतिहास दोहोरिएको छ।

दिव्यात्माके अवतरणसँगै हरेक युगमा उहाँहरुको अंशस्वरुपको आगमन भएको छ। यस युगमा पनि सद्गुरुदेवको अवतरणसँगै उहाँमा लाखौं लाख शिष्यशिष्याहरुको जन्म भएको छ, भइरहेको छ जसको जन्मको एउटै लक्ष्य, एउटै उद्देश्य आफ्ना सद्गुरुदेवको अवतरणको लक्ष्यलाई पूर्ण गर्नु अथवा धर्तीमा आध्यात्मिक युग ल्याउनु हो र आफ्नो अवतरणभरि आफूलाई लुकाएर चूपचाप एउटा सामान्य मनुष्य सरह रही महाप्रयाण लिनुभएका आफ्ना सद्गुरुदेवलाई विश्वसामु चिनाउनु हो।

जुलाई तीन तारीख अर्थात् महाप्रयाण दिवस हाम्रो सामु नजिकिइरहेको छ। गुरुदेवले आफ्नो कार्यलाई, आफ्नो महायोजनालाई आफ्ना परमप्रिय शिष्यशिष्यालाई जिम्मा लगाउनुभएको यो दिन, प्रत्येक शिष्यशिष्याले आफ्नो दायित्वबोध गर्ने यो दिनलाई भावमयरुपमा मनाउन र अन्य दिनहरुमा आफ्नो लक्ष्य, उद्देश्यमा दृढताका साथ अघि बढ्नु प्रत्येक शिष्यको कर्तव्य हो र यही नै आह्वान बाह्रौं महाप्रयाण दिवसको अवसरमा सिद्धाश्रम शक्ति केन्द्र नेपाल सम्पूर्ण शिष्य, शिष्या एवं गुरुप्रेमी महानुभावहरुमा गर्दछ। जय गुरुदेव !

# आश्रम गतिविधि

१-५: गत जेठ ७ गते (मे २१ तारीखका दिन) काठमाडौंको जैन भवनमा सम्पन्न दिव्य गुरु महोत्सव ।

६-९: गत महिनामा सञ्चालित विभिन्न मासिक हवन कार्यक्रमहरु।

१०-१३: गत जेठ २० र २१ गते गोरखामा सम्पन्न कार्यकर्ता तालिम तथा प्रशिक्षण।

गो. हु. का. द. नं. ९/०६०/६१
का. जि. द. नं. ७०/०५६

।। ॐ नमो गुरु मछिन्द्र, शब्द साँचा
पिण्ड काचा मेरा भक्ति, गुरुका शक्ति
नवनाथै जगाऊँ, चौरासीनाथै जगाऊँ
फूरो मंत्र ईश्वरो गुरु गोरख वाचा ।।

## दुर्लभ ग्रन्थहरूको अध्ययन गरौं ।
## मानव जीवनलाई धन्य बनाऔं ।।